॥ ॐ ॥ 2096▲

# उपनिषद्का चौध रत्न

## (उपनिषदोंके चौदह रत्न—नेपाली)



गीताप्रेस गोरखपुर
GITA PRESS, GORAKHPUR [SINCE 1923]

हनुमानप्रसाद पोद्दार

॥ ॐ ॥

# उपनिषद्का चौध रत्न

2096

(उपनिषदोंके चौदह रत्न—नेपाली)

त्वमेव माता च पिता त्वमेव
त्वमेव बन्धुश्च सखा त्वमेव।
त्वमेव विद्या द्रविणं त्वमेव
त्वमेव सर्वं मम देवदेव॥

हनुमानप्रसाद पोद्दार

नेपाली अनुवादक : **प्रा० शिवगोपाल रिसाल**

पुस्तकहरू यहाँ पनि उपलब्ध छन्।

गीताप्रेस पुस्तक बिक्री केन्द्र
पसल नं० 6,7,8 माधवराज सुमार्गी स्मृति भवन, वनकाली,
पशुपति क्षेत्र, काठमाडौं, नेपाल।
e-mail : gitapress.nepal@gmail.com

सं० २०७६ द्वितीय पुनर्मुद्रण २,०००
कुल मुद्रण ४,०००

❖ मूल्य—₹ १२
(बारह रुपये)

प्रकाशक एवं मुद्रक—
**गीताप्रेस, गोरखपुर—२७३००५**
(गोबिन्दभवन-कार्यालय, कोलकाता का संस्थान)
फोन : (०५५१) २३३४७२१, २३३१२५०, २३३१२५१
web : **gitapress.org** e-mail : **booksales@gitapress.org**
गीताप्रेस प्रकाशन **gitapressbookshop. in** से **online** खरीदें।

॥ श्रीहरि: ॥

# प्रार्थना

उपनिषद् हाम्रो त्यस्तो निधि हो, जसमा संरक्षित विविध ज्ञान–विज्ञानमयी अचिन्त्य रत्नराशीको निर्मल सच्चिदानन्दमयी ज्योतिको एउटा कण प्राप्त गर्नका लागि समस्त संसारका तत्त्वज्ञहरू श्रद्धासाथ शिर उठाउँदै र हात फैलाउँदै उभिएका छन् । उपनिषद्हरूमा कल्याणमय ज्ञानको अखण्ड र अनन्त प्रकाश छ, जसले घोर क्लेशमयी र अन्धकारमयी भवाटवीमा भ्रमण गर्दै जीवलाई सहसा त्यहाँबाट निकालेर नित्य निर्वाध ज्योतिर्मयी र पूर्णानन्दमयी ब्रह्मसत्तामा पुर्‍याइदिन्छ । खुसीको कुरा के छ भने आज तिनै उपनिषद्का छानिएका केही कथाहरू पाठकहरूलाई भेट गरिँदै छ । लगभग दस वर्षपूर्व बम्बईमा 'उपनिषदोनी बातों' नामक एउटा गुजराती पुस्तक देखेको थिएँ, त्यसपछि हिन्दीमा पनि त्यस्तै कथाहरू लेख्ने मन भएको थियो र त्यहीबेलामा केही कथाहरू लेखिएका थिए । तीमध्ये केही त बिलकुल गुजरातीकै शैलीमा थिए, केही अन्य प्रकारका । तिनै कथाहरू अब पाठकहरूलाई पुस्तकका रूपमा प्राप्त हुँदै छन् । यसका लागि गुजराती पुस्तकका लेखक र प्रकाशक महोदयप्रति म हृदयदेखि नै कृतज्ञ छु । यो सानो पुस्तकबाट हिन्दीका पाठकले यदि लाभ उठाए भने सम्भव हुन सक्छ कि पछि गएर उपनिषद्हरूको यस्तै छानिएका अन्य कथाहरूको प्रकाशनको पनि प्रयास गर्न सकिन्छ । भूलचुकका लागि विद्वान् पाठकले क्षमा गरिदिनुहोला र कृपापूर्वक सूचना दिनुहोला, जसका कारण यदि नयाँ संस्करण भयो भने त्यतिबेला उचित सुधार गर्न सकिन्छ । आशा छ, पाठकले यो प्रार्थनामाथि ध्यान दिनुहुने छ ।

विनीत

**हनुमानप्रसाद पोद्दार**

॥ श्रीहरिः ॥

# विषय–सूची



***

॥ श्रीहरिः ॥

# उपनिषद्का चौध रत्न

## (१) ब्रह्म नै विजयी हुन्

कुनै समयमा स्वर्गका देवताहरूले परमात्माका प्रतापले गर्दा असुरहरूमाथि विजय प्राप्त गरे । त्यस विजयका कारणले गर्दा मानिसहरूले देवताहरूको पूजा गर्न थाले । देवताहरूको कीर्ति र महिमा चारैतिर फैलन थाल्यो । विजयले उन्मत्त भएका देवताहरू भगवान्लाई बिर्सेर यो जित हाम्रै हो भन्न लागे । 'हामीले नै आफ्नो पराक्रम र बुद्धिबलले दैत्यहरूलाई दमन गरेका हौँ र त मानिसहरू हाम्रो पूजा गर्दछन् र हाम्रो विजय गीत गाउँछन् ।' मद(घमण्ड)ले सबैलाई अन्धो बनाइदिने हुनाले देवताहरू पनि विजयमदमा अन्धो भएर कोही सर्वशक्तिमान् ईश्वर छन् र उनकै बल एवम् प्रभावले सारा कुरा भएको छ भन्ने कुरा बिर्से । उनको सल्लाहविना त रुखको एउटा पात पनि हल्लँदैन ।

भगवान् असाध्यै दयालु हुनुहुन्छ । देवताहरू मिथ्या अभिमानमा मत्त भएर सत्कार्य बिर्सन लागे भन्ने कुरा उहाँले देख्नुभयो । यदि यिनीहरूको यो अभिमान दृढ भयो भने त असुरहरूकै जस्तो यिनीहरूको पनि सर्वनाश हुन्छ । विजय प्राप्त गरेपछि जहाँ सत्पुरुषहरूमा नम्रता आउँछ, त्यसको सट्टामा त अभिमान पो बढिरहेको छ । यस्तो विचार गरेर देवताहरूको अभिमानलाई नाश गरेर तिनको उपकार गर्नका लागि परमात्मा ब्रह्मले आफ्नो लीलाद्वारा एक यस्तो अद्भुत कौतुहलप्रद रूप प्रकट गर्नुभयो, जसलाई देखेर देवताहरूको बुद्धि नै चक्करायो । देवताहरू हड्बडाए र उनीहरूले यो यक्षजस्तै रूपधारी अद्भुत पुरुषलाई पत्ता लगाउनका लागि आफ्ना अगुवा अग्निदेवलाई भने कि 'हे जातवेदस् *! हामीहरूमध्ये तपाईं सबभन्दा बढी तेजस्वी हुनुहुन्छ, यी यक्षस्वरूप को हुनुहुन्छ भन्ने कुरा पत्ता लगाउनुहोस् ।' अग्निले भने–'ठीक छ, म पत्ता लगाएर आउँछु ।'

यसो भनेर अग्नि त्यहाँ जानुभयो, तर उहाँको नजिक पुग्दा साथै तेजले चक्कराएर बोल्नेसम्मको साहस समेत भएन । अन्तमा ती यक्षरूपी ब्रह्मले अग्निसँग सोधे कि 'तिमी को हौ ?' अग्निले भने–'मेरो नाम प्रसिद्ध

---

* जातवेदस्को अर्थ धनका दाता अथवा उत्पन्न भएका सम्पूर्ण पदार्थका ज्ञाता हुन्छ ।

छ, मलाई अग्नि भन्दछन् र जातवेदस् पनि भन्दछन् ।' ब्रह्मले फेरि सोधे– 'यो सब कुरा त ठीक छ, तर हे अग्नि ! तिमीमा कुन प्रकारको सामर्थ्य छ ? तिमी के गर्न सक्छौ ?' अग्निले भने– 'हे यक्ष ! यस पृथ्वी र अन्तरिक्षमा जेजति स्थावर र जङ्गम पदार्थ छन्, ती सारालाई जलाएर भस्म बनाइदिन सक्दछु ।'

ब्रह्मले के विचार गरे भने यिनको अहङ्कार कुराकानीले हटाउन सकिन्नँ, बरु यिनलाई कुनै चमत्कार देखाउनुपर्दछ । यस्तो विचार गरेर ब्रह्मले तिनीबाट आफ्नो शक्ति खिचेर लिनुभयो र **'तस्मै तृणे निदधौ'**– तिनको अगाडि एउटा सुकेको घाँसको त्यान्द्रो फ्याँकेर भन्नुभयो–'अरु सारालाई जलाउने कुरा त पछि हेरूँला, पहिले **'एतदह'**–यो त्यान्द्रोलाई तिमी जलाऊ ।'

अग्निदेवता आफ्नो पूरा शक्ति लगाएर त्यान्द्राको नजिक गए र त्यसलाई जलाउनका लागि सबै प्रकारले यत्न गर्न लागे, तर तृणलाई जलाउन सकेनन् । लाजले उनको टाउको निहुरियो र अन्तमा यक्षसँग केही पनि नभनीकन अग्निदेवता जस्ताको त्यस्तै फर्केर आए र भने कि मैले त यी यक्ष को हुन् भन्ने कुरा त पत्ता लगाउन सकिनँ ।

यसभन्दा पछि देवताहरूले वायुसँग भने कि 'हे वायु ! तपाईं गएर यी यक्ष को हुन्, पत्ता लगाउनुहोस् ।' वायुदेव 'ठीक छ' भनेर यक्षका नजिक गए, परन्तु उनको पनि अग्निकै जस्तो अवस्था भयो र उनी बोल्नै सकेनन् ।

यक्षले सोधे–'तिमी को हौ ?' वायुले भने–'म वायु हुँ, मेरो नाम र गुण प्रसिद्ध छ । गमन क्रिया गर्ने र पृथ्वीको बास्नालाई उँडाएर लैजाने हुँ । अन्तरिक्षमा गमन गर्ने भएका कारण मलाई मातरिश्वा पनि भन्दछन् ।' यक्षले भने–'तिमीमा के सामर्थ्य छ ?' वायुले भने 'यस पृथ्वीमा र अन्तरिक्षमा जति पनि पदार्थ छन्, ती सारालाई म उडाइदिन सक्छु ।' ब्रह्मले वायुको अगाडि पनि त्यही सुकेको त्यान्द्रो राखिदिएर भने– **'एतदादत्स्व'**–यो त्यान्द्रोलाई उडाइदेऊ ।

वायुले आफ्नो भएभरको बल लगाए, तर त्यस त्यान्द्रोलाई हल्लाउनसम्म पनि सकेनन् । यो देखेर वायुदेव असाध्यै लज्जित भए र

तुरुन्त नै देवताहरूकहाँ आएर भने–'हे देवगण ! यी यक्ष को हुन् भन्ने कुरा मैले पत्ता लगाउनै सकिनँ ।'

जब कर्मचारीहरूबाट काम हुँदैन, तब हाकिमको पालो आउँछ । यही न्यायले देवताहरूले इन्द्रसँग भने कि 'हे देवराज ! अब तपाईं नै जानुहोस् ।' इन्द्र यक्षको नजिक गए । देवराज इन्द्रलाई अभिमानले भरिएको देखेर यक्षरूपी ब्रह्म त्यहाँबाट अन्तर्धान भए । इन्द्रको अभिमान चूर्ण गर्नका लागि उनीसँग कुरासम्म पनि गरेनन् । इन्द्र लज्जित त भए नै तर उनले हिम्मत भने हारेनन् र ध्यान गर्न लागे । यत्तिकैमा उनले अन्तरिक्षमा अत्यन्त शोभायुक्त र सबै प्रकारका उत्तमोत्तम गहनाहरूले विभूषित हिमालयकी छोरी भगवती पार्वती अगाडि उभिएकी देखे । पार्वतीलाई दर्शन गरेर इन्द्र प्रसन्न भए र उनले के विचार गरे भने पार्वती नित्य ज्ञानबोधस्वरूप भगवान् शिवकै साथमा बस्नुहुन्छ; यसकारण उहाँलाई यक्षको ठेगाना अवश्य पनि थाहा होला । इन्द्रले विनयभावले उहाँसँग सोधे–'माता, अहिले जो यक्ष हामीलाई दर्शन दिएर अन्तर्धान हुनुभयो, उहाँ को हुनुहुन्थ्यो ?' उमाले भन्नुभयो–'यो यक्ष त प्रसिद्ध ब्रह्म हुनुहुन्थ्यो । हे इन्द्र ! तिनै ब्रह्मले नै असुरहरूलाई हराउनुभएको थियो । तिमीहरू त केवल निमित्त मात्रै हौ । ब्रह्मको विजयले नै तिमीहरूको महिमा बढेको हो र यसै कारणले तिम्रो पूजा पनि भएको छ । तिमी जुन आफ्नो विजय र महिमा मान्दछौ, त्यो सारा तिम्रो मिथ्या अभिमान हो, यसलाई त्याग गर र के सम्झ भने जे भएको छ, त्यो केवल त्यही ब्रह्मको सत्ताले नै भएको छ ।'

उमाको कुरा सुनेपछि इन्द्रको आँखा खुल्यो, अभिमान गयो । ब्रह्मको महान् शक्तिको परिचय पाएर इन्द्र फर्के र उनले अग्नि र वायुलाई पनि ब्रह्मको उपदेश सुनाए । अग्नि र वायुले पनि ब्रह्मको शक्ति जाने । यसैकारण यी तिनै देवता सबैभन्दा श्रेष्ठ भए । यिनीहरूमा पनि इन्द्र नै सबभन्दा श्रेष्ठ मानिए । कारण, उनैले ब्रह्मलाई सबभन्दा पहिले चिनेका थिए । यसबाट के कुरा सिद्ध हुन्छ भने ब्रह्मलाई सबभन्दा पहिले चिन्ने नै सर्वश्रेष्ठ हुन्छ ।

(केन–उपनिषद्को आधारमा)



# (२) अनौठा पाहुना

सत्ययुगको पवित्र समय छ । देशभरमा यज्ञको प्रचार भइरहेको छ । यज्ञको धुवाँ र त्यसको पवित्र वासनाले आकाश भरिभराऊ भएको छ । वेदका वरद मन्त्रहरूले दसैदिशा गुन्जायमान भएको छ । यज्ञको हवि ग्रहण गर्नका लागि स्वर्गका देवगण पृथ्वीमा ओर्लन्छन् । पवित्र र आनन्दमयी वाद्यध्वनिले समस्त जीव प्रफुल्लित भइरहेका छन् । यज्ञकर्ता यज्ञको पूर्णाहुति भएपछि परम श्रद्धाले ऋत्विक् गणलाई दक्षिणा दिन्छन् । आकाङ्क्षारहित भएर सात्त्विक यज्ञकर्ता वेदविधिलाई पूर्णतया पालन गर्दै सम्पूर्ण कार्य सम्पादन गर्दछन् । यस्तो पवित्र युगमा ऋषि वाजश्रवाका सुपुत्र उद्दालक मुनिले विश्वजित् नाम गरेको एउटा यज्ञ गरे । यस यज्ञमा सर्वस्व दान गर्नुपर्दछ । त्यहीअनुसार वाजश्रवस (वाजश्रवाके पुत्र) उद्दालकले पनि '**सर्ववेदसं ददौ**' आफ्नो सारा धन ऋषिहरूलाई दान दिए । ऋषि उद्दालकका नचिकेता नाम गरेका एक जना छोरा थिए । जुन बेला ऋषि ऋत्विज् र सदस्यहरूलाई दक्षिणा दिइरहेका थिए, त्यसमा राम्रा नराम्रा सबै किसिमका गाईहरू पनि दान दिइँदै थिए । त्यसैबेला बालक नचिकेताको निर्मल अन्तःकरणमा श्रद्धाले प्रवेश गऱ्यो । नचिकेताले आफ्नो मनमा विचार गरे–

**पीतोदका जग्धतृणा दुग्धदोहा निरिन्द्रियाः ।**
**अनन्दा नाम ते लोकास्तान्स गच्छति ता ददत् ॥**

(कठ. १ । १ । ३)

'जुन गाईहरूले(अन्तिम पटक) पानी पिइसकेका छन्, घाँस खाइसकेका छन् र दुध दिइसकेका छन्; जो शक्तिहीन अर्थात् गर्भधारण गर्न असमर्थ भइसकेका छन्, यसमा गाईहरू जसले दान गर्दछ, ऊ त आनन्दले शून्य भएको लोकमा पुग्दछ ।'

यज्ञ सकिएपछि गाईदान अवश्य हुनुपर्दछ, तर दान दिन अयोग्य गाईको दानले त दाताको उल्टो अमङ्गल पो हुन्छ । यसप्रकारको भावनाले सरल हृदय नचिकेताको मनमा ठूलो कष्ट भयो र आफूलाई नै बलिदान दिएर बाबुको अनिष्ट निवारण गर्नका लागि उनले भने–

**'तत् कस्मै मां दास्यसीति ।'**

'हे पिताजी ! म पनि तपाईंकै धन हुँ, मलाई तपाईं कसलाई दान दिनुहुन्छ ?' पिताले कुनै उत्तर दिनुभएन । नचिकेताले फेरि सोधे–'पिताजी ! मलाई कसलाई दिनुहुन्छ ?' पिताले यस पटक पनि उपेक्षा गरिदिनुभयो । धर्मभीरु नचिकेतासँग केही सिप लागेन । उनले तेस्रो पटक फेरि त्यही प्रश्न गरे । ऋषिलाई भोँक चल्यो र भनिदिए–'तिमीलाई मृत्युलाई दिन्छु ।'

**'मृत्यवे त्वा ददामीति'**

'पिताको रिसले भरिएको कुरा सुनेर नचिकेता विचार गर्न लागे कि 'शिष्य र छोराहरू तीन श्रेणीका हुन्छन्–उत्तम, मध्यम र अधम । जो गुरुको अभिप्राय सम्झेर उहाँको आज्ञाको कुनै प्रतीक्षा नगरेर नै सेवा गर्न लागिहाल्छन्, ती त उत्तम हुन् ।

जो आज्ञा पाएपछि काम गर्दछन्, ती मध्यम हुन् र जो गुरुको अभिप्राय बुझेर अनि आज्ञा पाएर पनि गुरुको इच्छानुसार काम गर्दैनन्, ती त अधममा पर्दछन् । म प्रथम श्रेणीमा चाहे नहोऊँ, तर दोस्रोमा त अवश्य पर्दछु । म अधम त कदापि होइन ।

मजस्तो गुणसम्पन्न छोरालाई पिताजीले किन यमराजलाई दान दिनुभयो ? सम्भवतः पिताजीले रिसको आवेशमा आएर नै यस्तो भन्नुभएको होला, तर जे होस्, पिताजीको वचन असत्य हुनुहुँदैन । यस्तो विचार गरेर उनले यमराजकहाँ जाने निश्चय गरे । धन्य पितृभक्ति र धन्य त्याग !'

छोराको अवस्था देखेर ऋषि एकातिर पछुताइरहेका थिए कि मैले रिसमा आएर छोरालाई हरे ! के भनें । यतिखेर नै नचिकेताले पिताजीको नजिक गएर भने–

**अनुपश्य यथा पूर्वे प्रतिपश्य तथापरे ।**
**सस्यमिव मर्त्यः पच्यते सस्यमिवाजायते पुनः ॥**

(कठ. १।१।६)

'हे पिताजी ! आफ्ना पितापुर्खाको व्यवहार हेर्नुहोस्, यसबेलाका साधु पुरुषहरूको व्यवहार हेर्नुहोस् । उनका चरित्रमा न ता पहिले कहिल्यै

असत्य थियो, न त अहिले नै छ। असाधु मान्छे नै असत्यको आचरण गर्दछन्, तर त्यो असत्यबाट कोही अपार–अमर हुन सक्दैनन्। मनुष्य अनाज जस्तै जराजीर्ण भएर मर्दछन् र अनाज जस्तै कर्मवश फेरि जन्मन्छन्। यसकारण यस अनित्य संसारमा मिथ्या आचरणबाट के प्रयोजन छ र ?' तपाईं आफ्नो सत्यलाई पालन गरेर मलाई यमराजकहाँ जाने आज्ञा दिनुहोस्।'

पितालाई सारै ठूलो दुःख भयो, तर छोराको सत्यपरायणता देखेर ऋषिले आज्ञा दिनुभयो। नचिकेताले पिताको वचन पूरा गर्नका लागि यमलोकतिर प्रस्थान गरे।

## यमराजका पाहुना

निर्भीक चित्त नचिकेताले पिताको आज्ञानुसार यमराजका घरमा गएर पत्ता लगाएर थाहा भयो, यमराज त कहीँ बाहिर जानुभएको रहेछ। नचिकेतालाई तीन रातसम्म अन्नजल ग्रहण नगरीकन यमराजको प्रतीक्षा गर्नुभयो। तेस्रो दिन यमराज फर्केर आएपछि घरका जहानले उनलाई भने–

**वैश्वानरः प्रविशत्यतिथिर्ब्राह्मणो गृहान्।**
**तस्यैतां शान्तिं कुर्वन्ति हर वैवस्वतोदकम्॥**

(कठ. १।१।७)

'साक्षात् अग्नि ब्राह्मण–अतिथिका रूपमा घरमा प्रवेश गर्दछन्। साधु गृहस्थ ती अतिथिरूप अग्निको दाहको शान्तिका लागि उनलाई जल पादार्घ्य प्रदान गर्दछन्। यसकारण, हे वैवस्वत ! तपाईं ती ब्राह्मण बालकको गोडा धुनका लागि पानी लिएर जानुहोस्। अतिथि तीन दिनदेखि तपाईंको बाटो हेरेर अनशन गरेर बस्नुभएको छ, यसकारण तपाईं स्वयम् आफू गएर उहाँको सेवा गर्नुहोस्, अनि उहाँ शान्त हुनुहुन्छ।'

**आशा प्रतीक्षे संगतंसुनृतां च**
**इष्टापूर्ते पुत्रपशुंश्च सर्वान्।**

**एतद् वृङ्क्ते पुरुषस्याल्पमेधसो**
**यस्यानश्नन् वसति ब्राह्मणो गृहे ॥**

(कठ. १।१।८)

'जुन अल्पबुद्धि मानिसका घरमा अतिथि ब्राह्मण भोजन नगरीकन बसेका छन्, त्यस्ता मन्दबुद्धिका सारा आशा र प्रतीक्षाहरू–ज्ञात र अज्ञात वस्तुहरू प्राप्त गर्ने इच्छाहरू तिनलाई पाएर प्राप्त हुने फल, सम्पत्ति, पुत्र, पशु, सत्यभाषण, यज्ञ र सारा पूर्त(कुवा, तलाउ, धर्मशाला आदि बनाएको पुण्य) नष्ट हुन्छन् ।' यो कुरा सुनेपछि यमराज पानीले भरिएको सुनको कलश लिएर दौडे र अतिथि नचिकेतालाई पादार्घ्य दिएर आदरपूर्वक भन्न लागे–

**तिस्रो रात्रीर्यदवात्सीर्गृहे मे**
**अनश्नन् ब्रह्मन्नतिथिर्नमस्यः ।**
**नमस्तेऽस्तु ब्रह्मन् स्वस्ति मेऽस्तु**
**तस्मात्प्रति त्रीन् वारान् वृणीष्व ॥**

(कठ. १।१।९)

'हे ब्राह्मण ! तपाईं नमस्कार गर्न योग्य अतिथि भएर मेरा घरमा तीन दिनदेखि केही पनि नखाईकन बस्नुभएको छ, तपाईंलाई नमस्कार छ र यसबाट मेरो दोषको निवृत्ति भएर मेरोक कल्याण होस् । मबाट ठूलो अपराध भएको छ । यसकारण तपाईं प्रत्येक रातका लागि एक–एक वरदानको हिसाबले जम्मा तीन वर मसँग माग्नुहोस् ।'

यमराजको ढोकामा तीन दिनसम्म अतिथि भोकै बसे, कत्रो ठूलो अपराध; प्राचीन भारतमा अतिथिसेवा गृहस्थको सबभन्दा आवश्यक कर्म मानिन्थ्यो । धर्मशास्त्रमा लेखिएको छ कि अतिथिलाई साक्षात् नारायण मानेर उनको सेवा गर्नुपर्दछ । जुन गृहस्थ अतिथिसेवाबाट शून्य छ, उसका सारा शुभकर्मलाई त्यो भोको अतिथिले लिएर जान्छ । भारतमा वैदिक युगमा घरमा आएका अतिथि–नारायणको ठूलो सेवा हुन्थ्यो । यमराजको यो उदाहरण ठूलो महत्त्वको छ । जुन दिनदेखि भारतले यस परम सेवाव्रतको बन्धनलाई खुकुलो बनाइदियो, जबदेखि भारतका गृहस्थ केवल

आफ्ना स्त्रीपुत्रको भोगविलासका सामग्रीहरूको प्रबन्ध गर्नमा नै कर्तव्यको इतिश्री मान्न लागे, जहिलेदेखि अतिथि नारायणका लागि गृहस्थको ढोका बन्द हुन लाग्यो, त्यतिबेलादेखि नै भारतको दुर्गति आरम्भ भयो । अस्तु, यमराज यमराजको कुरा सुनेर 'सदा सन्तुष्ट' नचिकेताले के विचार गरे भने सबभन्दा पहिले त पितालाई खुसी पार्नु नै छोराको सबभन्दा पहिलो कर्तव्य हो । त्यसैले, यमराजसँग यही पहिलो वर मागे–

**शान्तसङ्कल्पः सुमना यथा स्या–**
**द्वीतमन्युर्गौतमो माभि मृत्यो ।**
**त्वत्प्रसृष्टं माभिवदेत् प्रतीत**
**एतत् त्रयाणां प्रथमं वरं वृणे ॥**

(कठ. १ । १ । १०)

'हे मृत्युदेवता ! तीन वरहरूमध्ये म मेरा बाबा मप्रति शान्तसङ्कल्प, प्रसन्नचित्त र क्रोधरहित हुनुहोस् र जब म तपाईंको लोकबाट फर्केर आफ्नो घर जान्छु, तब उहाँले मलाई चिनेर मसँग प्रेमपूर्वक कुराकानी गर्नुहोस् भनी यही नै पहिलो वर माग्दछु ।'

यमराजले 'तथास्तु' भनेर भन्नुभयो–तपाईं यहाँबाट घर फर्केर गएपछि तपाईंका पिता पहिलेकै जस्तो तपाईंलाई चिन्नुहुनेछ, मृत्युको मुखबाट छुटेर आएको देखेर उहाँ आनन्दपूर्वक सुत्नुहुनेछ र उहाँको क्रोध पनि शान्त हुनेछ ।

पितृभक्त बालकको पहिलो कामना पूर्ण भयो । नचिकेताले यसप्रकार पिताको सुख, सम्पादन गरेर फेरि समस्त जीवहरूको कल्याणका लागि स्वर्गको साधन अग्नितत्त्वलाई जान्नका लागि यमराजसँग भने 'हे मृत्युदेवता ! स्वर्गमा कुनै पनि डर छैन; त्यहाँ न त तपाईं (मृत्यु) हुनुहुन्छ, न कसैलाई बूढो होइएला कि भन्ने डर नै छ । भोकप्यासबाट पार भएर र शोकबाट पार तरेर त्यहाँ गएको पुरुष ठूलो आनन्द भोग्दछ । यसर्थ, हे मृत्यो ! तपाईं त्यो स्वर्गको साधनभूत अग्निलाई यथार्थरूपको जान्नुहुन्छ । मेरो श्रद्धा भएको हुनाले त्यो मलाई बताइदिनुहोस् । कारण, त्यसलाई जानेर मनुष्य स्वर्गमा बसेर अमृतत्त्व (देवत्व) प्राप्त गर्ने छन् । यो म दोस्रो वर माग्दछु ।

यमराजले ठूलो तपस्या गरेर अग्निविद्या प्राप्त गरेका थिए । वास्तविक अधिकारी विना यो विद्यालाई दिनाले दाता र ग्रहिता दुवैमध्ये कसैको पनि कल्याण हुँदैन । परन्तु, आज नचिकेतालाई उत्तम जिज्ञासु जानेर अग्नितत्त्वको महत्त्व बताउँदै यमराजले भन्नुभयो–

**प्र ते ब्रवीमि तदु मे निबोध**
**स्वर्ग्यमग्निं नचिकेतः प्रजानन् ।**
**अनन्तलोकाप्तिमथो प्रतिष्ठां**
**विद्धि त्वमेतं निहितं गुहायाम् ॥**

(कठ. १।१।१४)

'हे नचिकेता ! म त्यो स्वर्गको साधनभूत अग्निलाई राम्रोसँग जान्दछु र तिमीलाई बताउँदछु, तिमी यसलाई राम्रोसँग सुन । यो अग्नि अनन्त (स्वर्ग) लोकको प्राप्तिको साधन हो । यो विराट्रूपले जगत्को प्रतिष्ठाको मूल कारण हो, यसलाई तिमी विद्वान्हरूको बुद्धिरूप गुफामा रहेको छ भन्ने जान ।'

यसभन्दा पछि यमराजले नचिकेतालाई सम्पूर्ण लोकहरूको आदिकारण भएको त्यो अग्निको र यसका लागि जस्तो र जति इटा चाहिन्छन्, ती इटा जसरी राख्नुपर्दछ, ती सारा विधि बताइदिए अर्थात् यज्ञस्थान निर्माणका लागि आवश्यक सामग्रीहरूको र अग्निचयन गर्ने विधिको विषयमा पनि बताइदिए । तीक्ष्णबुद्धि भएका नचिकेताले यमराजले बताएका सारा कुराहरूलाई दोहोऱ्याएर आफ्नो प्रतिभालाई पनि सिद्ध गरिदिए । यमराजलाई बालकको अप्रतिम योग्यता देखेर असाध्य खुसी लाग्यो र उनले पहिला तीन वरका अतिरिक्त एउटा चौथो अर्को पनि दिए–

**तवैव नाम्ना भवितायमग्निः**
**सृङ्कां चेमामनेकरूपां गृहाण ॥**

(कठ. १।१।१६)

'मैले जुन अग्निको कुरा तिमीसित भनें, त्यो तिम्रै नामले प्रसिद्ध हुनेछ र तिमी यो विचित्र रत्नले युक्त शब्दवती मालालाई पनि ग्रहण गर ।' नचिकेताको तेजले दीप्त भएको मुखमण्डल प्रसन्नताले भरियो । यमराजले

फेरि भन्नुभयो–जसले यथार्थरूपले मातापिता र आचार्यको उपदेशानुसार तीन पटक नचिकेता अग्निको उपासना गरेर यज्ञ, वेदाध्ययन र दान गरेको छ, त्यो मान्छे जन्म र मृत्युलाई पार गर्दछ र जब त्यो भाग्यमानी पुरुष त्यस अग्निलाई ब्रह्मबाट उत्पन्न भएको ज्ञानसम्पन्न पूजनीय देवता हुन् भनेर जान्दछ, तब त्यसले शान्ति प्राप्त गर्दछ। जो नाचिकेत अग्निको स्वरूप, सङ्ख्या र आहुति दिने प्रणालीलाई जानेर त्यसको उपासना गर्दछ, ऊ त देहपातभन्दा पहिले नै मृत्युको पाशलाई चुँडालेर र शोकरहित भएर स्वर्गमा आनन्दसँग बस्दछ।

नाचिकेत अग्निलाई स्वर्गको साधन बताएर र त्यसको अझ थप प्रशंसा गरेर यमराजले नचिकेतासँग भन्नुभयो–**तृतीयं वरं नचिकेतो वृणीष्व'**–'हे नचिकेता ! अब तेस्रो वर माग।'

## अधिकारी परीक्षा

पिताको प्रसन्नताको वर यस लोकका लागि र स्वर्गको साधन अग्निको ज्ञान परलोकका लागि वर प्राप्त गरेर नचिकेता के विचार गर्दछन् भने 'के स्वर्ग–सुखमा नै जीवको परम कल्याण छ ? स्वर्गबाट पनि त पुण्यात्माहरूको पुण्य सकिएपछि फर्केर आउनुपर्ने सुनिएको छ, यसर्थ, अब तेस्रो वरले त्यो मृत्युतत्त्व वा आत्मतत्त्वलाई जान्नुपर्दछ, जसलाई जानेपछि अरु जान्नुपर्ने बाँकी नै रहँदैन। यति सोचेर आत्मा परलोकमा जान्छ कि जाँदैन, मरेपछि आत्माको के गति हुन्छ ?'–यो आत्मज्ञानको जटिल प्रश्नको समाधान पाउने आशाले नचिकेताले यमराजसँग भने–'मृत मनुष्यका विषयमा एक शङ्का छ। कोही भन्छन्–'शरीर, इन्द्रियहरू, मन र बुद्धिको अतिरिक्त देहान्तर सम्बन्धी अरु आत्मा छ। कोही भन्छन्–'यस्तो कुनै आत्मा छैन। प्रत्यक्ष अथवा अनुमानबाट यस विषयको कुनै निर्णय हुन सक्दैन। तपाईं मृत्युका अधिपति देवता हुनुहुन्छ, यसकारण म यो आत्मतत्त्व के हो सो तपाईंबाट जान्न चाहन्छु। यो नै तेस्रो वर म माग्दछु।' नचिकेताको महत्त्वपूर्ण प्रश्न सुनेपछि यमराजले विचार गर्नुभयो–'ऋषिकुमार बालकै भए पनि ठूला बुद्धिमान् पो छन्, कस्तो गोपनीय तत्त्व जान्न खोजे। परन्तु, आत्मतत्त्व त उपयुक्त पात्रलाई नै बताउनु उचित हो, अनधिकारीलाई

आत्मतत्त्व प्रकट गर्‍यो भने हितका स्थानमा प्रायः अनिष्ट नै भएको छ। यसकारण, पहिले पात्र–परीक्षाको आवश्यकता छ।' यस्तो विचार गरेर यमराजले यो तत्त्व जान्न कठिन छ भनेर नचिकेतालाई टालटुल पार्न खोज्नुभयो। यमराजले भन्नुभयो–'देवताहरूलाई पहिले यस विषयमा शङ्का लागेको थियो। यो आत्मतत्त्वका बारेमा बुझ्नु कुनै सजिलो कुरा छैन। यो निकै सूक्ष्म विषय छ। यसकारण, हे नचिकेता ! तिमी अर्कै वर माग। यस वरका लागि मलाई झिँजो नलगाऊ।'

नचिकेता विषयको कठिनताको नाम सुनेर हडबडाएनन्, बरु अझ बढी दृढतापूर्वक भन्न लागे–'हे मृत्यु ! पूर्वकालमा देवताहरूलाई पनि जब यस विषयमा शङ्का भएको थियो र जब तपाईं पनि यो विषय सजिलो छैन भन्नुहुन्छ, तब मैले पनि यस विषयलाई सम्झाउने तपाईंजस्तै अर्को वक्ता खोजे पनि कोही पाउन सक्दिनँ। तपाईं कुनै अर्को वरका लागि भन्नुहुन्छ, परन्तु म के सम्झन्छु भने यसको तुलनामा कुनै अर्को वर नै छैन, किनभने यही नै कल्याणप्राप्तिको कारण छ। यसर्थ, मलाई यही कुरा सम्झाउनुहोस्।'

कुनै विषयलाई जब बताउनु छैन भने सबभन्दा पहिले त्यसको कठिनताको डर देखाइन्छ। यमराजले पनि परीक्षाका लागि यही गर्नुभयो, तर नचिकेता यस परीक्षामा उत्तीर्ण भए। अब फेरि यमराजले अझ कठिन परीक्षा लिन खोज्नुभयो। साधकको परीक्षाका लागि दुई ओटा नै प्रधान शस्त्र हुन्छन्–एउटा भय र अर्को लोभ। नचिकेता डर देखाए पनि डेग चलेनन्; लोभको प्रयोग उनलाई गरेर यमराजले भन्नुभयो–'बालक तिमी यस्तो वर लिएर के गर्दछौ ? तिमी ग्रहण गर, यी सुखका विशाल सामग्रीहरूलाई'–

**शतायुषः पुत्रपौत्रान् वृणीष्व,**
**बहून् पशून् हस्तिहिरण्यमश्वान्।**
**भूमेर्महदायतनं वृणीष्व**
**स्वयं च जीव शरदो यावदिच्छसि॥**

(कठ. १।१।२३)

'सय–सय वर्ष बाँच्ने छोरा–नाति माग, गाई आदि धेरै पशु, हात्ती, सुन, घोडा र विशाल भूमण्डलका राज्य माग र यी सारालाई भोग्नका लागि जति वर्ष बाँच्ने इच्छा छ, त्यति नै वर्ष बाँचिरहू ।' यति मात्र पनि होइन–

**एतत्तुल्यं यदि मन्यसे वरं**
**वृणीष्व वित्तं चिरजीविकां च ।**
**महाभूमौ नचिकेतस्त्वमेधि**
**कामानां त्वा कामभाजं करोमि ॥**

(कठ. १ । १ । २४)

'यस्तै नै अरु कुनै वर चाहन्छौ भने अझ धेरै धनको साथ दीर्घजीवन माग । धेरै के, यो विशाल भूमिका तिमी सम्राट् बन ! म तिमीलाई आफ्ना सारा कामनाहरूलाई इच्छानुसार भोग्न सक्ने बनाइदिन्छु ।' यसका अतिरिक्त–

**य ये कामा सुदुर्लभा मर्त्यलोके**
**सर्वान्कामांश्छन्दतः प्रार्थयस्व ।**
**इमा रामाः सरथाः सतूर्या**
**न हीदृशा लम्भनीया मनुष्यैः ।**
**आभिर्मत्प्रत्ताभिः परिचारयस्व**
**नचिकेतो मरणं मानुप्राक्षीः ॥**

(कठ. १ । १ । २५)

'जुन जुन भोग मृत्युलोकमा दुर्लभ छन्, ती सारालाई तिमी आफ्नो इच्छानुसार माग । यी रथहरूसहित र वाद्यवादनसहित सुन्दर रमणीहरू समेत माग । यस्ता रमणीहरू त मनुष्यहरूले पाउनै सक्दैनन् । मैले दिएका यी सारा रमणीहरूद्वारा तिमी आफ्नो सेवा गराऊ, तर हे नचिकेता ! मबाट मरण–सम्बन्धी (मरेपछि आत्मा रहन्छ कि रहँदैन) यस्तो प्रश्न नसोध ।'

संसारमा यस्ता को होलान्, जो नखोजे पनि यतिका भोगसामग्रीहरू र तिनलाई भोग्नका लागि दीर्घजीवनव्यापी सामर्थ्य प्राप्त भएर पनि

नचाहनु, सुन्दा साथै वास्ता गर्दैनन्, परन्तु विचार र वैराग्यको उच्च भूमिकामा पुगेका नचिकेता अटल र अचल भएर बसेका छन् । यमराजले दिएको प्रलोभनले उनका मनमा कुनै असर परेन । सत्य हो–

**रमा बिलासु राम अनुरागी । तजत बमन जिमि जन बडभागी ॥**

'जो भाग्यमानी रामका प्रेमी छन्, ती रमाको विलास(भोगहरू)लाई वान्ताजस्तै मानेर त्यागिदिन्छन्, जसले एक पटक विश्वविमोहन मनोहर झाँकीको अनौठो छटा देखेको छ, त्यो फेरि विषयप्रति भुलेर पनि त्यतातिर फर्कँदैन । नचिकेताले भने–'हे मृत्यु ! तपाईंले जुन भोग–वस्तुहरूको वर्णन गर्नुभयो, ती भोलिसम्म रहन्छन् या रहँदैनन्, यसमा पनि शङ्का नै छ । यिनले त मनुष्यका सारा इन्द्रियहरूका तेजलाई हरण गरिदिन्छन् । तपाईंले जुन दीर्घजीवन दिन चाहनुभएको छ, त्यो पनि अनन्तकालका तुलनामा सारै थोरै नै हो । यदि ब्रह्मको जीवन पनि अल्पकालकै हो, तब अरुको त कुरै के हो र ? यसकारण, म यी सारा चाहन्नँ । तपाईंका रथ, घोडा, हात्ती र नाचगान आफूसँगै राख्नुहोस् ।'

धन पाएर मानिस कहिल्यै पनि तृप्त हुँदैन, जहाँ केवल कामनाको नै विस्तार छ, त्यहाँ तृप्ति कसरी हुने ? भोगविलासको तृष्णामा अभाव, अपूर्णतामा अतृप्ति र 'आकाङ्क्षा'भन्दा बाहेक अरु के नै रहन सक्छ र ? यसर्थ **'वरस्तु मे वरणीयः स एव'**–मलाई त त्यही आत्मतत्त्वरूप वर चाहिएको छ । राम्रै हो, अजर र अमर देवताहरूको नजिक आएर तल मृत्युलोकका जरा–मरणशील कुन त्यस्तो मनुष्य होला, जो अस्थिर र परिणाममा दुःख दिने विषयहरू चाहला ? शरीरको सौन्दर्य र विषयभोगका प्रमादहरूलाई अनित्य र क्षणभङ्गुर सम्झेर पनि संसारको दीर्घजीवनबाट आनन्द मान्ने को त्यस्तो समझदार होला र ? अतएव हे मृत्यु ! जसका विषयमा मानिस शङ्का गर्दछन्, जो महान् परलोकका विषयमा निर्णयात्मक आत्मतत्त्व विज्ञान हो, मलाई त्यही दिनुहोस् ।

**योऽयं वरो गूढमनुप्रविष्टो**
**नान्यं तस्मान्नचिकेता वृणीते ।**

(कठ. १ । १ । २९)

'यो आत्मतत्त्वसम्बन्धी वर गूढ भए पनि नचिकेता योभन्दा अर्को (अज्ञानी मान्छेद्वारा इच्छित) अनित्य वर चाहँदैनन् ।'

यो अग्निपरीक्षामा पनि नचिकेता उत्तीर्ण भए। यमराजले अब नचिकेतालाई आत्मज्ञानका पूर्ण अधिकारी हुन् भनी बुझ्नुभयो । वास्तवमा जो यो मायामय जगत्का सारा सुखको मनोहर चित्र, धनको प्रलोभन, रमणीहरूको रमणीय प्रणय–बन्धन र कमनीय कीर्तिको कामना आदि सारा पदार्थहरूको आत्मज्ञानका तुलनामा काकविष्ठावत् अथवा विषको लड्डु बराबर अत्यन्त हेय र त्याज्य हो भनी सम्झन्छ, जो यो लोक र परलोकका ठूलाभन्दा ठूला भोगहरूलाई तुच्छ सम्झेर ती सबलाई लात मार्न सक्छ, त्यो नै आत्मज्ञानको यथार्थ अधिकारी हो । तर, जो एक कौडीका लागि जन्मजन्मान्तरसम्म वैरभावलाई आश्रय दिन तयार हुन्छन् र काम पऱ्यो भने आत्मज्ञानभन्दा अर्को कुरै गर्दैनन्, त्यस्ता मानिस कुन अधिकारका प्राणी हुन्, यस कुरालाई लिएर विज्ञ पाठक आफैं विचार गर्नुहोस् । विषय–वैराग्य, साधु–सङ्गति र भजन–साधनाका प्रभावले पहिले आत्मज्ञानको अधिकार प्राप्त गरेर त्यसपछि त्यसको प्राप्तिका लागि प्रयत्न गर्नुपर्दछ । होइन भने दुवैतिर भ्रष्ट हुनै नै ज्यादा सम्भावना छ ।

## श्रेय र प्रेय

यमराजले नचिकेतालाई परम वैराग्यवान्, निर्भीक र उत्तम अधिकारी सम्झेर परम प्रसन्न भएर के भन्नुभयो भने 'हे नचिकेता ! एउटा वस्तु श्रेय (कल्याण) हो र अर्को वस्तु प्रेय (श्रेय मनुष्यको वास्तविक कल्याण–मोक्षको नाम हो र प्रेय स्त्री–पुत्र, धन–मानादि प्यारो लाग्ने पदार्थहरूको नाम हो) । यी दुवैको भिन्नभिन्न प्रयोजन छ र यी आ–आफ्ना प्रयोजनमा मुनष्यलाई बाँध्छन् ।

यी दुईमध्ये जो श्रेयलाई ग्रहण गर्दछन्, तिनको कल्याण (मोक्ष) हुन्छ र जो प्रेयलाई छान्दछन्, ती हेर्दाखेरी राम्रो लाग्ने धनमानादिमा फँसेर पुरुषार्थबाट भ्रष्ट हुन्छन् ।

'श्रेय र प्रेयमा दुवैमध्ये मानिस चाहेअनुसार जुनलाई पनि ग्रहण गर्न सक्दछ । बुद्धिमान् पुरुष श्रेय र प्रेय दुवैका गुण–दोषहरूलाई राम्रोसँग बुझेर छुट्याउँछन् र नीर–क्षीर विवेकी हाँसले जस्तै प्रेयलाई त्यागेर श्रेयलाई ग्रहण गर्छन् । तर, मूर्ख मान्छे भने **'प्रेयो मन्दो योगक्षेमाद् वृणीते'**–योगक्षेमका लागि अर्थात् प्राप्त स्त्री, पुत्र धनादिको रक्षा र अप्राप्त भोग्य पदार्थहरूको प्राप्तिका लागि प्रेयलाई नै ग्रहण गर्दछन् ।' हे नचिकेता !–

**स त्वं प्रियान् प्रियरूपांश्च कामा–**
**नभिध्यायन्नचिकेतोऽत्यस्राक्षीः ।**
**नैतांसृङ्कां वित्तमयीमवाप्तो**
**यस्यां मज्जन्ति बहवो मनुष्याः ॥**

(कठ. १ । २ । ३)

'तिमीले मैले बराबर प्रलोभन देखाउँदा पनि जो प्रिय स्त्री–पुत्रादि र प्रियरूप अप्सरादि समस्त भोग्य विषयहरूलाई अनित्य सम्झेर त्यागिदियौ, यो द्रव्यमयी निकृष्ट गतिमा तिमी पुगेनौ, जसमा साधारणतः धेरैजसो मानिस डुबिरहन्छन् ।'

यो भनाइद्वारा यमराजले नचिकेताको विवेक र वैराग्यको विशेष प्रशंसा गरेर वित्तमयी संसारगतिको निन्दा गर्नुभयो र साथै यमराजले विवेक–वैराग्यसम्पन्न मानिस नै ब्रह्मज्ञानको अधिकारी भएको पनि सूचित गर्नुभयो । यसभन्दा पछि श्रेय र प्रेयको परस्पर विपरीत फल उत्पन्न गर्ने कारणको मीमांसा गर्दै यमराज भन्न लाग्नुभयो–

**दूरमेते विपरीते विषूची**
**अविद्या या च विद्येति ज्ञाता ।**
**विद्याभीप्सिनं नचिकेतसं मन्ये**
**न त्वा कामा बहवोऽलोलुपन्त ॥**

(कठ. १ । २ । ४)

'विद्या र अविद्या–यी दुवै प्रसिद्ध छन्, यी दुवै एकअर्कादेखि अत्यन्त विपरीत र बेग्ला–बेग्लैतिर लैजाने खालका छन् । हे नचिकेता ! म

तिमीलाई विद्याका अभिलाषी मान्दछु, किनकि तिमीलाई धेरै प्रकारका भोगले पनि लोभ्याउन सकेनन् ।'

**अविद्यायामन्तरे वर्तमानाः ।**
**स्वयम् धीराः पण्डितम्मन्यमानाः ।**
**दन्द्रम्यमाणाः परियन्ति मूढा**
**अन्धेनैव नीयमाना यथान्धाः ॥**

(कठ. १ । २ । ५)

'अविद्यामा परेका जो मान्छे छन् ती आफूलाई बडो बुद्धिमान् र पण्डित मान्दछन्, ती भोग गर्ने इच्छा भएका मूढ मान्छे अन्धाले डोऱ्याएको अन्धो मान्छेजस्तै चारैतिर ठक्कर खाँदै भड्किरहन्छन् ।'

वास्तवमा आजकल जगत्मा नजानी–नबुझीकनै र कुनै पनि ज्ञान नभइकन आफूलाई तत्त्वज्ञानी मान्ने मानिस धेरै छन् । यदि तिनको अन्तःकरणको दृश्य हेर्ने हो भने तिनमा नानाप्रकारका कामनाहरूको ताण्डवनृत्य भएको देखिन्छ ।

अर्कोतिर कुरा र तर्कमा कतै पनि ब्रह्मज्ञानमा अलिकति पनि त्रुटि देखिँदैन । यमराजको भनाइअनुसार यसप्रकारका मिथ्या ज्ञानीहरूका लागि मोक्षको ढोका बन्द हुन्छ र तिनलाई फेरि–फेरि आवागमनको चक्रमा ठक्कर खानै पर्छ । **'पुनरपि जननं पुरनरपि मरणं पुनरपि जननीजठेर शयनम्'** यस्तो किन हुन्छ त ? यमराज भन्नुहुन्छ–

**न साम्परायः प्रतिभाति बालं**
**प्रमाद्यन्तं वित्तमोहेन मूढम् ।**

'धनको मोहले मोहित, प्रमादमा रत रहने मूर्खले परलोक वा कल्याणको बाटो देख्दैन ।' ऊ त केवल–

**अयं लोको नास्ति पर इति मानी**
**पुनः पुनर्वशमापद्यते मे ॥**

(कठ. १ । २ । ६)

'यही कुरा मान्दछ कि स्त्री–पुत्रादि भोगहरूले भरिएको एकमात्र यही लोक हो; योभन्दा अर्को लोक छैन । यही मान्यताको कारण उसले बराबर मेरो (मृत्युका) अधीन हुनुपर्दछ ।'

यमराजले फेरि भन्नुभयो–'हे नचिकेता ! आत्मज्ञान कुनै साधारण कुरा होइन । धेरै मानिसहरू त कस्ता छन् भने आत्माको सम्बन्धको कुरै सुन्न पाउँदैनन् । धेरैजसो मानिस सुनेर पनि यसलाई जान्नै सक्दैनन्, आत्माको विषयका वक्ता पनि आश्चर्यरूप हुन्छन्; कहीँकहीँ, कोहीकोही मात्र भेटिन्छन् र यो आत्मालाई प्राप्त गर्ने पनि कहीँ कोही एक निपुण पुरुष हुन्छ । यसैगरी, कुनै निपुण आचार्यबाट शिक्षा प्राप्त कोहीकोही नै आश्चर्यरूप पुरुष आत्मालाई जान्ने हुन्छ ।'*

कुनै साधारण मनुष्यको विवेचनाले आत्माले आत्माको यथार्थ ज्ञान हुँदैन । आत्मज्ञान त कुनै अनन्य (अभेददर्शी) समर्थ पुरुषद्वारा उपदेश गरिएपछि मात्र हुन्छ; किनभने यो (आत्मा) सूक्ष्मभन्दा पनि सूक्ष्म हुनाको कारण सर्वथा अतर्क्य छ । यो ज्ञान तर्कबाट प्राप्त हुँदैन, यो त कुनै अलौकिक ब्रह्मज्ञानीले बताएपछि मात्र प्राप्त हुन्छ । हे नचिकेता ! तिमीजस्ता जिज्ञासु मलाई मिल्दै रहून् ।'

यति भनेपछि यमराजले के विचार गर्नुभयो भने यदि नचिकेताको मनमा कर्मकाण्डको फलको अनित्यताका सम्बन्धमा कुनै पनि सन्देह बाँकी रह्यो भने त त्यसको परिणाम राम्रो हुँदैन । यसकारण, यमराजले भन्नुभयो–

'हे नचिकेता ! मलाई थाहा छ–धनराशि अनित्य हो र अनित्य वस्तुबाट नित्य वस्तु प्राप्त हुँदैन । यो जानेर पनि मैले अनित्य पदार्थबाट स्वर्गसुखको साधनभूत नचिकेत अग्निको चयन गरेको हुँ । यसैबाट मैले यो आपेक्षिक अर्थात् अन्यान्य पदहरूको अपेक्षा नित्य (धेरै कालसम्म रहने) यमराजको पद पाएको हुँ ।'

* गीता अध्याय २ । २९ मा यही आशयको श्लोक छ ।

परन्तु हे बाबु ! तिमी त सबै प्रकारले श्रेष्ठ छौ, तिमीले त्यो परम पदार्थका अगाडि जगत्को चरम सीमाको भोग, प्रतिष्ठा, यज्ञफलरूपी हिरण्यगर्भको पद, अभयको मर्यादा (चिरकालको स्थायी जीवन), स्तुत्य र महान् ऐश्वर्यलाई हेय सम्झेर धैर्यद्वारा त्यागीदियौ । यथार्थमा तिमी ठूला गुणसम्पन्न छौ ।

यद्यपि यो आत्मा–यो नित्य प्रकाशरूप आत्मा जीवरूपले हृदयमा विराजमान छ, तथापि सहज रुपले यसको दर्शन भने हुन सक्दैन । किनभने यो अत्यन्त नै सूक्ष्म छ, यो अत्यन्त गूढ छ, समस्त जीवहरूको अन्तरमा प्रविष्ट छ, बुद्धिरूपी गुफामा लुकेको छ, रागद्वेषादि अनर्थमय देहमा बसेको छ र सबैभन्दा पुरानो छ ।

जब कुनै धीर पुरुष यी देवतालाई आत्मयोगद्वारा अर्थात् चित्तलाई विषयहरूबाट निवृत्त गरेर त्यसलाई आत्मामा समावेश गर्दछ, तब त्यसलाई जानेर ऊ हर्ष र शोकदेखि पर पुग्दछ । कारण, आत्मामा हर्ष र शोकलाई कतै पनि ठाउँ छैन, यो त वास्तवमा केवल बुद्धिको विकारमात्र हो । जसले ब्रह्मनिष्ठ आचार्यद्वारा आत्मतत्त्वका विषयमा सुनेर त्यसलाई राम्रोसँग धारण गरेको छ र धर्मयुक्त यो सूक्ष्म आत्मालाई जड शरीरादिभन्दा भिन्न सम्झेर प्राप्त गरेको छ, ऊ नै आनन्दधामलाई पाएर अतुलनीय आनन्दमा रमाउँछ । म के सम्झन्छु भने नचिकेताको लागि पनि त्यही मोक्षको ढोका खुलेको छ ।

**'विवृत्तं सद्म नचिकेतसं मन्ये'**

यमराजका कुरा सुनेर आफूलाई आत्मज्ञानको अधिकारी ठानेर नचिकेताले भने–

**अन्यत्र धर्मादन्यत्राधर्मादन्यत्रास्मात्कृताकृतात् ।**
**अन्यत्र भूताच्च भव्याच्च यत्तत्पश्यसि तद्वद ॥**

(कठ. १ । २ । १४)

'हे भगवान् ! तपाईं मदेखि प्रसन्न हुनुहुन्छ भने धर्म र अधर्मदेखि पर तथा यो कार्य र कारणरूप प्रपञ्चभन्दा भिन्न एवम् भूत तथा भविष्यत्देखि

पर जुन प्रकारले व्यावहारिक विषयहरूदेखि टाढा परब्रह्मलाई तपाईंले देख्नुभएको छ, त्यही नै मलाई बताइदिनुहोस् ।'

## साधन र स्वरूप

नचिकेताको प्रश्न सुनेपछि यमराजले आत्माको स्वरूप बताउनुभन्दा अगाडि त्यसको साक्षात् साधन प्रणवको उपदेशको आरम्भ गर्नुभयो । यमराले भन्नुभयो–

**सर्वे वेदा यत्पदमामनन्ति**
**तपांसि सर्वाणि च यद्वदन्ति ।**
**यदिच्छन्तो ब्रह्मचर्यं चरन्ति**
**तत्ते पदंसंग्रहेण ब्रवीम्योमित्येतत् ॥***

(कठ. १ । २ । १५)

'समस्त वेद जसको प्रतिपादन गर्दछन्, समस्त तप जसलाई बताउँछन्, अर्थात् जसका लागि गरिन्छ, जसलाई प्राप्त गर्नका लागि साधकगण ब्रह्मको अनुष्ठान गर्दछन्, त्यो पद म सङ्क्षेपमा बताउँछु । त्यो हो 'ॐ' ।

त्यो परात्पर परमात्मा, जो सब नामहरूबाट पर भएर पनि सब नामले भरिएको छ, जो सर्वथा नामविहीन भएर पनि अनेक नाम हरूबाट सम्बोधित गरिन्छ, त्यसका समस्त नामहरूमा 'ॐ' सर्वश्रेष्ठ हो । 'ॐ' शब्द ब्रह्मको प्रतीक हो । यो अक्षर नै ब्रह्म हो र यही अक्षरलाई ब्रह्मस्वरूप सम्झेर यसको उपासना गर्नाले साधकले जो चाहेको छ, त्यही पाउँछ ।

**'यो यदिच्छति तस्य तत् ।'**

यो ओंकार नै ब्रह्मको प्राप्तिको सबभन्दा उत्तम र श्रेष्ठ अवलम्बन हो र यही अवलम्बनलाई जान्यो भने ब्रह्मलोकमा महिमा हुन्छ ।

यसरी, प्रणवोपासनारूपी साधन बताएर अब यमराज आत्माको स्वरूप बताउँदै भन्नुहुन्छ–

---

* गीताको अध्याय ८ को ११ औं श्लोकमा अलिकति फरक पारेर यो कुरा भनिएको छ र अगाडि गएर १३ औं श्लोकका प्रणवको साधन बताइएको छ ।

**न जायते म्रियते वा विपश्चि–**
**न्नायं कुतश्चिन्न बभूव कश्चित् ।**
**अजो नित्यः शाश्वतोऽयं पुराणो**
**न हन्यते हन्यमाने शरीरे ॥**[1]

(कठ. १ । २ । १८)

यो चैतन्यरूप आत्मा न जन्मन्छ, न मर्छ । यो न कुनै अर्कोबाट उत्पन्न भएको हो, न कुनै अर्को नै यसबाट उत्पन्न भएको छ । यो अजन्मा छ, नित्य छ, शाश्वत छ र सनातन छ, शरीरलाई मारे तापनि यो मर्दैन । मर्नु र मार्नु सब त शरीरमा नै हुन्छ, आत्मा न कहिले मर्छ, न उसलाई कसैले मार्न सक्छ । शास्त्रादिले शरीरलाई काटेपछि पनि देहमा बसेको यो आत्मा जस्ताको तस्तै रहिरहन्छ । जसरी घर भत्के तापनि त्यसमा रहेको आकाश नष्ट हुँदैन, यसैप्रकार देहादिको नाश हुँदैमा आत्माको नाश हुँदैन । यसैकारण यमराज भन्नुहुन्छ–

**हन्ता चेन्मन्यते हन्तुंहतश्चेन्मन्यते हतम् ।**
**उभौ तौ न विजानीतो नायंहन्ति न हन्यते ।**[2]

(कठ. १ । २ । १९)

'अज्ञानी मार्नेवाला सम्झन्छ कि 'म यसलाई मार्दछु' र मर्नेवाला सम्झन्छ 'म मारिएँ', परन्तु ती दुवै नै बुझ्दैनन्; किनभने यो आत्मा न ता कसैलाई मार्दछ, न ता कोही मर्छ ।' यो आत्मा–

**अणोरणीयान् महतो महीया–**
**नात्मास्य जन्तोर्निहितो गुहायाम् ।**

(कठ. १ । २ । २०)

जो सूक्ष्मभन्दा पनि सूक्ष्मतर र महान्भन्दा पनि महत्तर छ, जो जीवका हृदयगुफामा लुकेको छ–यसलाई त्यसैले देख्दछ, जो कामनाबाट

१–२–गीतामा २ । ११९–२० मा अलिकति शब्दान्तरले यी दुवै मन्त्र जस्ताको तस्तै छन् ।

रहित छ, जो कर्महरूको सिद्धि र असिद्धिमा समानचित्त भएको हुन्छ, जो छोरा–सम्पत्ति र पत्नीको उत्पत्ति र विनाशमा हर्ष र शोकले युक्त हुँदैन, जो प्रत्येक अवस्थामा परमात्माको एक अनन्त सत्तालाई उपलब्ध गर्दछन्, उनी शान्त र स्थिर रहन्छन् । तर, जो यस प्रकारका छैनन्, होइनन्, उनलाई आत्माको दर्शन हुँदैन, किनभने यो आत्मा निश्चल भए तापनि टाढा–टाढासम्म पुग्दछ, सुतेजस्तो भए तापनि सर्वत्र जान्छ, विद्या र धनादिले मदयुक्त भए पनि मदरहित छ । यसलाई मभन्दा अतिरिक्त अरु कसैले पनि जान्न सक्दैन ।

**हन्ता चेन्मन्यते हन्तुंहतश्चेन्मन्यते हतम् ।**
**उभौ तौ न विजानीतो नायंहन्ति न हन्यते ।**

(कठ. १ । २ । २२)

यो समस्त अनित्य शरीरमा बसे तापनि शरीररहित छ, समस्त अस्थिर पदार्थहरूमा व्याप्त भए तापनि सदा स्थिर छ, यो नित्य र महान् विभु आत्मालाई जो धीर पुरुष जान्दछ, ऊ नै शोकबाट पार हुन पुग्छ । यो एकै आत्मा चारैतिरबाट सबैमा व्यापक भएर पनि –

**नायमात्मा प्रवचनेन लभ्यो**
**न मेधया न बहुना श्रुतेन ।***

'न त यो वेदको प्रवचनबाट प्राप्त हुन्छ, न विशाल बुद्धिले भेट्टाइन्छ र न केवल जन्मभरि शास्त्रहरूको श्रवण गर्नाले नै पाइन्छ ।' यो त जो यसैलाई पाउनका लागि जो परम व्याकुल हुन्छ, त्यसैलाई प्राप्त हुन्छ–

**यमेवैष वृणुते तेन लभ्य–**
**स्तस्यैष आत्मा विवृणुते तनुंस्वाम् ॥**

(कठ. १ । २ । ३२)

जसलाई यो स्वप्रकाश आत्मा स्वयम्ले स्वीकार गर्दछ र जसको नजिकै आफ्नो यथार्थ स्वरूप प्रकट गरिदिन्छ ।

* गीता ११ । ५३ श्लोकमा प्रायः यस्तै वचन पाइन्छन् ।

**सोइ जानइ जेहि देहु जनाई। जानत तुम्हहि तुम्हइ होइ जाई॥**

जबसम्म परमात्मालाई पाउनका लागि हृदयमा व्याकुलता र अधीरता उत्पन्न हुँदैन, जबसम्म साधक निष्काम साधनले सम्पन्न भएको हुँदैन, जबसम्म परमात्माको नित्य स्वरूपसँग उसको मनको सर्वथा संयोग भएको हुँदैन, त्यतिबेला सारा कुरा र सारा क्रियाहरू शुष्क र व्यर्थ हुन्छन्। यस्ता मान्छेको ज्ञान केवल मौखिक र लोकरञ्जकमात्र हुन्छ। त्यसबाट कुनै लाभ हुँदैन। जो पापहरूमा रत छ, जो दम, शम तथा चित्तवृत्तिहरूको निरोधरूप समाधिले रहित छ, जसको मन अशान्त छ, उसलाई केवल पाण्डित्यको प्रचुरता र तर्कहरूको तीक्ष्णताले नै आत्मसाक्षात्कार हुन सक्दैन। जो शम–दमादि गुणहरूले युक्त छ, जो शुद्ध, संयत र समाहित चित्तयुक्त छ, जो इन्द्रिय लालसाहरूबाट विरत छ र जसले श्रवण, मनन तथा निदिध्यासनद्वारा अभेदरूप प्रज्ञान प्राप्त गरेको छ, ऊ नै त्यो प्रज्ञानद्वारा यो आत्मालाई प्राप्त गर्न सक्छ–

**'प्रज्ञानेनैनमाप्नुयात्।'**

जो साधनसम्पन्न छैनन्, उनलाई आत्माको प्राप्ति हुन सक्दैन। यही कुरालाई बताउनका लागि यमराजले फेरि बताउनुभयो–'हे नचिकेता! हेर, अरुको त कुरै के, जो ब्राह्मण र क्षत्रिय समस्त धर्मका रक्षक र प्राणस्वरूप छन्, जो यति श्रेष्ठ छन्, उनी पनि त्यो परमात्माको 'अन्न' बन्दछन्। सबैको संहार गर्ने मृत्यु पनि जुन परम्पराको भोजनको उपसेचन अर्थात् सागपात बन्दछ, यस्ता महामहिमान्वित परमात्मालाई संसारका भोगहरूमा आसक्त र साधनरहित मनुष्य कसरी जान्न सक्छन् कि उहाँ 'यसप्रकार' हुनुहुन्छ।'

आत्मा र परमात्माको निर्णय गरेर यमराजले शिष्यहरूलाई कर्मबाट अग्निविद्या र ज्ञानबाट ब्रह्मविद्या प्राप्तिको कुरा बताउनका लागि भन्नुभयो, जो यजमानलाई दुःख सागरबाट पारि पुऱ्याउनका लागि पुलजस्तै हुन्छ,

त्यो नै नाचिकेत अग्नि हो–र जो संसार–सागरबाट पार हुन चाहनेहरूका लागि परमआश्रयस्वरूप छ, त्यही अक्षर परब्रह्म हो । कर्मद्वारा अपरब्रह्मलाई र ज्ञानद्वारा परब्रह्मलाई जान्नुपर्दछ । जीवको मुक्तिका लागि जति मार्गहरू छन्, ती सबैमा ज्ञान नै प्रधान हो । त्यसपछि यमराजले आत्माको रथीरूपले वर्णन गर्दै भन्नुभयो–

**आत्मानं रथिनं विद्धि शरीरं रथमेव तु ।**
**बुद्धिं तु सारथिं विद्धि मनः प्रग्रहमेव च ॥**
**इन्द्रियाणि हयानाहुर्विषयांस्तेषु गोचरान् ।**
**आत्मेन्द्रियमनोयुक्तं भोक्तेत्याहुर्मनीषिणः ॥**

(कठ. १ । ३ । ३–४)

शरीर रथ हो, आत्मा रथका स्वामी रथी हुन्, बुद्धि सारथि हो र मन लगाम हो, यही नै सम्झ । श्रोत्रादि इन्द्रिहरू घोडा हुन्, शब्द–स्पर्शादि विषय नै यिनीहरू दौडने मैदान हो र शरीर, इन्द्रिय तथा मनले युक्त आत्मालाई भोक्ता भन्दछन् ।

घोडाहरूद्वारा नै रथ चल्छ, परन्तु त्यो रथलाई चाहे जतातिर लिएर जानु हातमा लगाम समात्ने बुद्धिमान् सारथिको काम हो । इन्द्रियरूपी बलवान् र प्रमथनकारी घोडाहरू विषयरूपी मैदानमा मनमानीसँग दौडन चाहन्छन्, तर यदि बुद्धिरूपी सारथि मनरूपी लगामलाई जोडसँग खिचेर तिनीहरूलाई आफ्नो वशमा राख्न सक्छ भने मनरूपी लगामको सहाराविना नै जता पायो, उता दौडने त घोडाहरूको तागत नै हुँदैन ।

यो सबैलाई थाहा छ–इन्द्रियहरू वास्तवमा विषयको ग्रहण त मन साथमा भए न गर्न सक्छन् । घोडाहरू लगामले सहारा दिएअनुसार त्यतैतिर दौडन्छन् । तर, यो लगामलाई ठीक राख्नु त सारथिको बल, बुद्धि र मार्गको ज्ञानमा नै निर्भर गर्दछ । यदि बुद्धिरूप सारथि विवेकपूर्ण स्वामीको आज्ञाकारी, लक्ष्यमा सदा स्थिर, बलवान् र इन्द्रियरूपी

घोडाहरूको सञ्चालन–क्रियामा निपुण छैन भने ता इन्द्रियरूपी दुष्ट घोडा उनको वशमा नरहेर लगामलाई आफ्नै वशमा राख्छन् र परिणाममा तिनले रथका रथी र सारथि समेतलाई आफूले चाहेको जस्तो खराब ठाउँमा लगेर पछारिदिन्छन् । तर–

**यस्तु विज्ञानवान् भवति युक्तेन मनसा सदा ।**
**तस्येन्द्रियाणि वश्यानि सदश्वा इव सारथेः ॥**

(कठ. १ । ३ । ६)

'जसको बुद्धिमा विवेक हुन्छ, जसको मन एकाग्र र समाहित हुन्छ, त्यसका इन्द्रियहरू ठीक घोडाहरूको जस्तै बुद्धिरूप सारथिको वशमा रहेका हुन्छन् ।'

जसको मन निग्रहरहित छ, जो अविवेकी छ र जो सदा अपवित्र छ, यस्तो रथलाई कहिले पनि आफ्नो लक्ष्य परमपद ब्रह्मको प्राप्ति हुनै सक्दैन । उसलाई बराबर कष्टमय जन्ममरणरूप संसारमा भड्किनुपर्छ । तर–

**यस्तु विज्ञानवान् भवति समनस्कः सदा शुचिः ।**
**स तु तत्पदमाप्नोति यस्माद् भूयो न जायते ॥**

(कठ. १ । ३ । ८)

जो विवेकी हुन्छ, जसको मन निगृहीत रहन्छ, त्यो सदा पवित्र रहन्छ, त्यो त जहाँबाट भए पनि फेरि फर्केर जन्म ग्रहण गर्न पर्दैन, उसले त्यस्तो परम पद पाउँछ ।' जसको बुद्धिरूप सारथि विवेकी छ, जसको मनरूपी लगाम स्थिर छ, जसको इन्द्रियरूपी घोडा लगामको साथसाथै विवेकमयी बुद्धिका वशमा छन्, उनी यही रथका सहायताले संसार सागरको पारिपट्टि आफ्नो लक्ष्यस्थानमा अनायास नै पुग्दछन् र उही–

**तद्विष्णोः परमं पदम् ।**

- विष्णुको परमपद हो ।

यमराजले फेरि के भन्नुभयो भने 'इन्द्रियहरूभन्दा तिनका विषयहरु श्रेष्ठ हुन्छन् र बुद्धिभन्दा महत् श्रेष्ठ रहन्छ, महत्भन्दा अव्यक्त श्रेष्ठ छ र अव्यक्तभन्दा पुरुष श्रेष्ठ छ ।' बस्, यो पुरुषभन्दा पर अरु कोही छैनन्–

**सा काष्ठा सा परा गतिः ।**

यही चरम सीमा हो, यही परम गति हो, तर यो केवल–

**दृश्यते त्वग्रयया बुद्धय सूक्ष्मया सूक्ष्मदर्शिभिः ॥**

सूक्ष्मदर्शीहरूद्वारा सूक्ष्म वस्तुको निरूपणमा निपुण एकाग्रतायुक्त बुद्धिद्वारा नै देख्न सकिन्छ । अतएव '**उत्तिष्ठत जाग्रत प्राप्त वरान्निबोधत**' उठ ! जाग ! र महापुरुषहरूका लागि समीपमा गएर यसलाई राम्ररी जान ।

बुद्धिमान् मानिस यो मार्गलाई तरबारको धारमा हिँड्नु बराबर हो भनी बताउँछन्–

**क्षुरस्य धारा निशिता दुरत्यया दुर्गं पथस्तत्कवयो वदन्ति ॥**

इन्द्रियहरू बहिर्मुखी छन्, यसैकारण तिनीहरू त केवल बाहिरका वस्तुहरूलाई देख्छन्, अन्तरात्मालाई देख्दैनन् । कोही विवेकसम्पन्न पुरुष नै अमृतत्वको शुभ इच्छाले यी इन्द्रियहरूलाई अन्तर्मुखी बनाएर अन्तरात्मालाई देख्न सक्दछन् ।

अज्ञानी मान्छे बाहिरी विषयहरूको पछिपछि दौडन्छन् र यसैबाट ती सर्वत्र व्याप्त मृत्युको फन्दामा फँस्दछन्, तर ज्ञानी पुरुष भने त्यो अमृतत्वलाई जानेर यी अनित्य पदार्थहरूले गर्दा नित्य वस्तुको प्रार्थना गर्दैनन् ।

जो यहाँ (कार्यमा) छ, त्यहीँ उहाँ(कारण) छ । तर, जो उपाधिको सम्बन्धले र भेदज्ञानका कारण अविद्याको प्रभावले त्यो अभिन्न स्वरूप ब्रह्मलाई नाना रूपहरूमा देख्दछ–

**मृत्योः स मृत्युमाप्नोति ।**

–त्यो बराबर मृत्युलाई (जन्म–मरणको) नै प्राप्त हुन्छ । यस ज्ञानको प्राप्ति केवल विचारद्वारा नै हुन सक्छ । यहाँ अलिकति पनि भेद छैन । जसले यहाँ भेद देख्दछ, उसले बराबर मृत्युको शरण लिनुपर्दछ । जस्तो शुद्ध पानीमा शुद्ध पानी मिलाएपछि दुवै मिलेर एकरस तन्मय

हुन्छ, यस्तै नै आत्मदर्शी पुरुषको आत्मा परमात्मामा मिलेर ब्रह्मरूप बन्दछ ।

यमराजले अगाडि फेरि भन्नुभयो–'हे नचिकेता ! म प्रसन्न भएर तिमीलाई यो अत्यन्त गोपनीय सनातन ब्रह्मतत्त्व बताइरहेको छु । मरेपछि जीवको गति हुन्छ, त्यो तिमी सुन । जसको जस्तो कर्म र जस्तो वासना हुन्छ, जसको जस्तो ज्ञान हुन्छ, त्यसैअनुसार कोही ता मरेपछि आमाको गर्भमा जान्छन् र कोही मरेपछि रुख, ढुङ्गा आदि स्थावर योनिमा पुग्छन् । जब सारा प्राणी निद्राग्रस्त हुन्छन्, तब एक निर्गुण ज्योतिर्मय ब्रह्म सुप्रकाशितरूपले जागेर सम्पूर्ण विषयहरूलाई प्रकाशित गर्दछ, त्यही नै शुद्ध हो, त्यही ब्रह्म हो, त्यसैको नाम अमृत हो, त्यसभन्दा बाहेक अरु कोही लुकेको ब्रह्म छैन । पृथ्वी आदि सारा लोक त्यसैमा अवस्थित छन्, त्यसको अतिक्रमण कोही पनि गर्न सक्तैन ।'

**अग्निर्यथैको भुवनं प्रविष्टो रूपं रूपं प्रतिरूपो बभूव ।**
**एकस्तथा सर्वभूतान्तरात्मा रूपं रूपं प्रतिरूपो बहिश्च ॥**
**वायुर्यथैको भुवनं प्रविष्टो रूपं रूपं प्रतिरूपो बभूव ।**
**एकस्तथा सर्वभूतान्तरात्मा रूपं रूपं प्रतिरूपो बहिश्च ॥**

(कठ. २ । २ । ९–१०)

अग्नि एक नै हो, तर जस्तो सम्पूर्ण भुवनमा प्रवेश गरेपछि उही भिन्नभिन्न वस्तुहरूमा भिन्नभिन्नरूपमा देखिन्छ, त्यसरी नै समस्त प्राणीहरूमा रहने आत्मा एक नै छ, तर सबमा भिन्नभिन्नरूपमा देखिन्छ । आकाशजस्तै निर्विकार हुनाको कारण बाहिर पनि त्यही रहन्छ । जसरी एक नै वस्तु लोकमा प्रवेश गरेर भिन्नभिन्नरूपले देखिन्छ, यसरी नै सब प्राणीहरूमा व्यापक एक नै आत्मा भिन्नभिन्नरूपमा देखिन्छ तथा बाहिर पनि रहन्छ । अग्नि र वायुको दृष्टान्तमा केवल के अन्तर छ भने अग्नि त प्रकाशस्वरूप भएर लोकमा प्रवेश गर्दछ र वायु प्राणस्वरूप भएर प्रत्येक देहमा प्रवेश गर्दछ ।

**सूर्यो यथा सर्वलोकस्य चक्षुर्न लिप्यते चाक्षुषैर्बाह्यदोषैः ।**
**एकस्तथा सर्वभूतान्तरात्मा न लिप्यते लोकदुःखेन बाह्यः ॥**

(कठ. २ । २ । ११)

जस्तो एउटै सूर्य सारा लोकका आँखा हुन्, राम्रा–नराम्रा सबै वस्तुहरूको प्रकाश सूर्यबाटै हुन्छ, तथापि त्यो बाहिरी दोषहरूबाट लिप्त हुँदैन । यसैप्रकार, त्यो आत्मा सर्वव्यापी भएर पनि जगत्का दुःखहरूबाट लिप्त भएको छैन, तिनीहरूबाट बाहिर रहन्छ ।

समस्त भूतप्राणीहरूको भित्र शान्तिरूपले रहने त्यो आत्मा एकै छ । त्यही सबको नियन्ता हो, त्यो एक नै अनेक रूपमा देखिन्छ । जो धीर पुरुष यसप्रकार आत्मालाई जान्दछन्, उनलाई नै–

**तेषां सुखं शाश्वतं नेतरेषाम् ।**

– नित्य सुख प्राप्त हुन्छ, अरुलाई होइन ।

**नित्यो नित्यानां चेतनश्चेतनाना–**
**मेको बहूनां यो विदधाति कामान् ।**
**तमात्मस्थं येऽनुपश्यन्ति धीरा–**
**स्तेषां शान्तिः शाश्वती नेतरेषाम् ॥**

(कठ. २ । २ । १३)

जो नित्यहरूको पनि नित्य, जो चेतनाहरूको पनि चेतन हो, जो एक नै धेरैका कामनाहरू पूर्ण गर्दछ, त्यो शरीरस्थ आत्माको जसलाई अनुभव हुन्छ, त्यसले नै नित्य शान्ति प्राप्त गर्दछ, अरुले होइन । जसलाई सूर्यले प्रकाशित गर्न सक्दैनन्, जो चन्द्रमा र तारागणहरूबाट प्रकाशित हुँदैन, बिजुली जसलाई प्रकाशित गर्न सक्दैन, त्यसलाई बिचरा अग्निले त के प्रकाशित गर्नु ? जसको प्रकाशले नै सबैको प्रकाश हुन्छ, त्यही परिपूर्ण प्रकाशको दिव्य ज्योतिले समस्त विश्व प्रकाशित भइरहेको छ ।

यो दृश्यमान संसारको समस्त पदार्थ त्यही परब्रह्मबाट निस्किएर उसैको सत्ताले सदा काम्दै आ–आफ्ना काममा लागिरहेका छन्; किनभने त्यो त उठेको वज्रजस्तै महाभयङ्कर छ ।

**भयादस्याग्निस्तपति भयात्तपति सूर्यः ।**
**भयादिन्द्रश्च वायुश्च मृत्युर्धावति पञ्चमः ॥**

(कठ. २। ३। ३)

अग्नि यसैको भयले तापित हुन्छ, सूर्य यसैको डरले तापित हुन्छ तथा इन्द्र, वायु र पञ्चम मृत्यु यसैका डरले दौडन्छन् ।

जो पुरुष यो शरीरको नाश हुनुभन्दा अगाडि नै त्यो आत्मालाई जान्दछ, त्यही मुक्त हुन्छ, होइन भने त–

**सर्गेषु लोकेषु शरीरत्वाय कल्पते ॥**

– यी जन्म–मरणशील लोकहरूमा उसले फेरि जन्म ग्रहण गर्नुपर्दछ ।

जब मनुष्यका सारा कामनाहरू नष्ट हुन्छन् र जब मन सबै प्रकारको मलिनतालाई त्यागेर अत्यन्त विशुद्ध बन्दछ र जब अन्तःकरणका समस्त कामनाहरू सम्पूर्णरूपले नष्ट हुन्छन्, तब यो–

**अथ मर्त्योऽमृते भवत्यत्र ब्रह्म समश्नुते ।**

(कठ. २। ३। १४)

– मरणशील मनुष्य अमृत बनेर यहीं नै ब्रह्मलाई पाएर ब्रह्मानन्दमा मग्न हुन्छ। यस अवसरमा उसको हृदयको (म र मेरोको) समस्त ग्रन्थीहरू टुट्छन् र ऊ त अमृत बन्दछ। बस–

**एतावदनुशासनम् ।**

– यही शास्त्रको उपदेश हो, यसभन्दा पर अरु केही पनि छैन ।

(कठोपनिषद्का आधारमा)



# (३) आपद्–धर्म

एक समय कुरुदेशमा धुनधानसँग असिना पर्नाले र फूल्न लागेको अन्नको नाश हुनाले भयानक अकाल (अनिकाल) पऱ्यो । अनिकालबाट पीडित नरनारी अन्नको अभावले देशै छोडेर भाग्न थाले । यसकारण चक्रका छोरा उषस्तिले पनि आफ्नी तरुनी भईनसकेकी (किशोरी) पत्नी आटिकीलाई साथमा लिएर देशलाई छोडिदिए र भड्कँदै–भड्कँदै दुवै एक माहुतेको गाउँमा पुगे । भोकले गर्दा त्यसबेला उषस्ति मरणासन्न अवस्थामा पुग्दै थिए । उनले एक जना माहुतेलाई उमालेको मासको गेडा खाँदै गरेको देखे र उसको नजिकै गएर अलिकति मास दिनुहोस् न भनेर भने । माहुतेले भने–'म यस भाँडोमा राखेको मास खाइरहेको छु, यो जुठो मासबाहेक मसँग अरु मास छैन, तब म तिमीलाई कहाँबाट ल्याएर दिऊँ ?' माहुतेको कुरा सुनेर उषस्तिले भने–'मलाई यसैबाट अलिकति देऊ ।' तब माहुतेले त्यसैबाट अलिकति मास उषस्तिलाई दिए र पानी अगाडि राखिदिएर 'लाऊ, यो मास खाएर पानी पनि खाऊ ।' यसमा उषस्तिले भने–'भाइ ! मैले यो पानी पिएँ भने त मलाई अर्काको जुठो खाएको दोष लाग्छ ।'

माहुतेले अचरजसित सोधे–'त के तिमीले जुन मास मसँग मागेर खायौ, त्यो जुठो होइन, फेरि जुठो पानीमा कुनचाहिँ दोष छ त ?'

उषस्तिले उत्तर दिए-'भाइ ! यदि मैले यो मास खाइनँ भने मेरो प्राण नै रहँदैन (प्राण–सङ्कट परेका बेला आपद्धर्म सम्झेर नै म मास खाइरहेको छु ।) अब पानी त मेरो इच्छानुसार मलाई अर्को ठाउँमा पनि प्राप्त हुन सक्छ । यदि मासकै जस्तो म तिम्रो जुठो पानी पनि खाऊँ त त्यो त स्वेच्छानुसार नै हुन्छ, आपद्धर्म हुँदैन । यसकारण म तिम्रो जुठो पानी खान्नँ ।' यति भनेर उषस्तिले अलिकति मास खाए र बाँकी रहेको अलिकति आफ्नी पत्नीलाई दिए । ब्राह्मणलाई भने पहिले नै केही खाने कुरा प्राप्त

भइसकेको थियो, त्यसकारण पतिले दिएको जुठो मास उनले खाइनन्, आफूसँगै राखिन्।

भोलि बिहान उषस्तिले प्रातः कृत्य गरेपछि आफ्नी श्रीमतीसँग भने–'के गरूँ, मलाई अलिकति मात्रै भए पनि खानका लागि अन्न मिल्यो भने म आफ्नो प्राण निर्वाह हुनेसम्मको केही धन ल्याउन पाउन सक्ने थिएँ। यहाँ नजिकै एक जना राजा यज्ञ गरिरहेका छन्, उनी ऋत्विक्को काममा मलाई पनि वरण गर्ने छन्।'

यो सुनेपछि श्रीमतीले भनिन्–'मसँग हिजो बचेको अलिकति मास छ, अलिकति लिनुहोस्। यो खाएर यज्ञका लागि चाँडै नै गइहाल्नुहोस्।' भोकले अशक्त भएका उषस्तिले मास खाएर अलिकति स्वस्थ भएर उनी राजाको यज्ञमा गए। त्यहाँ गएर उनी आस्तवमा (स्तुतिको ठाउँमा) स्तुति गर्ने उद्गाताहरूको नजिकै गएर बसे र स्तुति गर्नेहरूले गरेको त्रुटि देखेर तिनीहरूसँग भने–'हे प्रस्तोता ! तपाईं जुन देवताको स्तुति गर्दै हुनुहुन्छ, ती देव कुन हुन् ? तपाईं यदि अधीष्ठातालाई नजानीकनै तिनको स्तुति गर्नहुन्छ त याद राख्नुस्, तपाईंको टाउको तल खस्नेछ।' यसैगरी, उद्गातालाई भने–''हे उद्गाता ! (उद्गीथको स्तुति गर्ने ब्राह्मण) यदि तपाईं उद्गीथभागका देवतालाई नजानीकन उनको उद्गान गर्नुहुन्छ भने तपाईंको टाउको तल खस्नेछ।' त्यसपछि उनले प्रतिकारको गान गर्नेको नजिक गएर भने–'हे प्रतिकारको गान गर्ने प्रतिहर्ता ! यदि तपाईं देवतालाई नजानीकन उनलाई प्रतिहार गर्नुहुन्छ भने तपाईंको टाउको तल झर्ने छ।' यो सुनेर स्तोता, उद्गाता र प्रतिहर्ता आदि सबै ऋत्वक्गण टाउको खस्ने डरले आ–आफ्नो काम छोडेर चुपचाप लागेर बसे।

राजाले आफ्ना ऋत्विज्हरूको यस्तो अवस्था देखेर भने–'हे भगवान्! तपाईं के हुनुहुन्छ, आफ्नो परिचय दिनुहोस्।' उषस्तिले भने–'हे राजन् ! म चक्रको छोरा उषस्ति हुँ।' राजाले भने–'ओहो ! भगवान् उषस्ति तपाईं नै हुनहुन्छ ? मैले तपाईंका बारेमा धेरै नै गुण

सुनेको छु। यसैकारण मैले ऋत्विज्‌को कामका लागि तपाईंलाई धेरै खोजेको थिएँ, परन्तु तपाईंलाई नभेट्टाएको हुनाले मलाई अरु नै ऋत्विज् वरण गर्नुपर्‍यो। अब मेरो सौभाग्यले तपाईं पाल्नुभएको छ। हे भगवान्! ऋत्विज्‌सम्बन्धी समस्त कार्य तपाईंले नै गर्ने कृपा गर्नुहोस्।'

उषस्तिले भने–'हस्, हुन्छ, तर यी ऋत्विज्‌हरूलाई हटाउनु हुँदैन। मेरो आज्ञानुसार यी ऋत्विज्‌गण आ–आफ्ना कर्म गरून् र दक्षिणा पनि यिनीहरूलाई जति दिनुहुन्छ, मलाई पनि त्यतिमात्र दिनुहोला।' (न त मैले यिनीहरूलाई निकाल्न चाहन्छु र दक्षिणामा बढी धन लिएर यिनीहरूको अपमान नै गर्न चाहन्छु। मेरै रेखदेखमा यिनीहरू सारा कर्म गर्दै गर्दछन्।) त्यसपछि प्रस्तोता, उद्‌गाता आदि समस्त ऋत्विज्‌हरूले उषस्तिको नजिक गएर विनयपूर्वक उनीसँग सोधीसोधीकन सबै कुरा सिके र उषस्तिले तिनीहरूलाई सबै कर्म सम्झाएर तिनीहरूद्वारा नै राजाको यज्ञ राम्ररी पूर्ण गराए।

(छान्दोग्य–उपनिषद्‌का आधारमा)



# (४) गाडावालाको ज्ञान

प्रसिद्ध जनश्रूत राजाका छोराका नाति जानश्रूति नाम गरेका एक राजा थिए । उनी असाध्य श्रद्धाले आदरपूर्वक योग्य पात्रहरूलाई धेरै दान दिन्थे । पाहुनाहरूका लागि उनका घरमा प्रत्येक दिन धेरै नै प्रकारका खाने कुरा बनाइन्थ्यो । उनी प्रशस्त दक्षिणा पनि दिन्थे । उनी के चाहन्थे भने सहर र गाउँमा बस्ने प्रत्येक साधु–ब्राह्मण आदि मेरै अन्न खाऊन्, यसका लागि उनी जहाँतहीँ सर्वत्र धर्मस्थल, अन्नसत्र अथवा छात्रावास खोलेका थिए, त्यहाँ पाहुनाहरूका लागि बस्ने र खाने सुप्रबन्ध गरिदिएका थिए ।

राजाको अन्नसत्रबाट सन्तुष्ट भएका ऋषि र देवताहरूले राजालाई सचेत गराएर उनलाई ब्रह्मानन्दको सुखप्राप्त गराउनका लागि हाँसको रूप धारण गरे । राजाले देखून् भनेर ठीक समय पारेर उड्दै राजाको महलको छतमाथितिर पुगे । त्यहाँ पछिल्लो हाँसले अघिल्लो हाँससँग भन्यो–'भाइ, भल्लाक्ष ! यी जनश्रुतिका छोराका नाति जानश्रुतिको तेज दिनकै जस्तो सर्वत्र फैलिरहेको छ । यो तेजलाई नछुनु है, कतै छोइयो भने त त्यो तेजले तिमीलाई खरानी बनाइदिनेछ ।' यो सुनेर अगाडिको हाँसले भन्यो–

'भाइ ! तिमी बैलगाडी चलाउने गाडावान् रैक्वलाई जान्दैनौ, यिनको त ती रैक्वको तेजभन्दा कम भए तापनि तिमी यिनको प्रशंसा गरिरहेका छौ ।' पछिल्लो हाँसले भन्यो–'ती गाडावान् रैक्व को हुन् र कस्ता छन्, त्यो त बताऊ ।' अघिल्लो हाँसले भन्यो–'भाइ, ती रैक्वको महिमाको कति बखान गरूँ । जस्तो जुवा खेल्ने पासाको तलका तिनै भाग उसैको अन्तर्गत हुन्छ, अर्थात् जब जुवाडेको पासा लागेको हुन्छ, तब उसले तिनैलाई जितेको हुन्छ । यसैगरी, प्रजाले जेजति शुभकार्य गर्दछन्, ती सारा शुभकार्य र तिनको फल रैक्वको शुभकर्मकै अन्तर्गत पर्दछन् अर्थात् प्रजाका समस्त शुभकर्मको फल ती राजालाई मिल्दछ । ती रैक्व जुन जान्नयोग्य वस्तुलाई

जान्दछन्, त्यो वस्तुलाई जसले जान्दछ, उसलाई पनि रैक्वकै समान सबै प्राणीहरूको शुभकर्महरूको फल प्राप्त हुन्छ । म तिनै विद्वान् रैक्वका लागि नै यस्तो भन्दै छु ।'

महलमा सुतिरहेका राजा जानश्रुतिले हाँसहरूका यी कुरा सुनेर रातभर उनी यिनै कुराकानीको सम्झना गर्दै रातभर जागा रहे । प्रातःकालमा वन्दीजनहरूको स्तुति सुनेर राजाले ओछ्यानबाट उठेर वन्दीजनसँग भने–'हे वत्स ! तिमीहरू गाडावान् रैक्वकहाँ गएर उनीसँग भनी कि 'म उहाँसँग भेट्न चाहन्छु ।' भाटले भने–'हे राजन् ! ती गाडावान् रैक्व को हुन् र कस्ता छन् ? राजाले जेजति हाँसहरूबाट सुनेका थिए, त्यो सारा उनलाई भनेर सुनाए । राजाको आज्ञानुसार भाटहरूले धेरैजसो नगर र गाउँहरूमा रैक्वको खोजी गरे, परन्तु कतै पत्ता लगाउन सकेनन्, तब फेरि उनीहरूले हामीले रैक्वलाई कहीँ पनि भेटाउन सकेनौँ' भनी राजालाई भने । राजाले के विचार गरे भने यी भाटहरूले नगर र गाउँहरूमा नै खोजे खोलान् । ठीकै हो, ब्रह्मज्ञानी महापुरुष विषयी पुरुषहरूका बीचमा कसरी बस्नुहुन्थ्यो ? र राजाले भने–अरे ! तिमीहरू जाओ, ब्रह्मवेत्ता पुरुषहरू बस्ने ठाउँमा (अरण्य, नदीतट आदि एकान्त स्थानमा) उनलाई खोज ।'

राजाको आज्ञाअनुसार भाट फेरि गएर खोज्दा–खोज्दा कुनै एकान्त निर्जन प्रदेशमा गाडीको तल लुतो कन्याएर बसिरहेका एक जना पुरुषलाई देखे । वन्दीजन उनको नजिकै गएर नम्रतापूर्वक सोध्न लागे– 'हे प्रभो ! के गाडावान् रैक्व भनेका तपाईं नै हुनुहुन्छ ? मुनिले भन्नुभयो– हो म नै हुँ ।'

रैक्वलाई पत्ता लगाएपछि भाटहरू धेरै नै खुसी भएर तुरुन्त राजाकहाँ गएर भने कि 'फलानो ठाउँमा हामीले रैक्वलाई पत्ता लगायौँ ।'

त्यसभन्दा पछाडि राजा छ सय गाई, सुनको कण्ठहार र खच्चरहरू नारिएको एक रथ आदि लिएर रैक्वकहाँ गए र त्यहाँ गएर हात जोडेर रैक्वसँग भने–'भगवान् ! यी छ सय गाई, एक सुनको हार र यी खच्चरहरू

नारिएको रथ, यी सारा मैले तपाईंका लागि बनाएको हुँ । कृपागरी, तपाईं यिनलाई स्वीकार गरिदिनुहोस् र हे भगवान् ! तपाईं जुन देवताको उपासना गर्नुहुन्छ, ती देवताको मलाई उपदेश दिनुहोस् ।'

राजाको कुरा सुनेपछि रैक्वले भने–'अरे शूद्र* ! यी गाई, हार र रथ तिमी आफैंसित राख ।' यो सुनेपछि राजा फर्केर घर आए र विचार गर्न लागे–'मलाई मुनिले किन शूद्र भने ? कि त मैले हाँसहरूको वाणी सुनेर आफू शोकातुर थिएँ, यसैले शूद्र भनेको होला अथवा थोरै धन दिएर उत्तम विद्या लिनुलाई अनुचित प्रयत्न सम्झेर पनि मुनिले मलाई शूद्र भन्न सक्छन् । तर, ज्ञान नगरीकन मेरो शोक जाँदैन, अतएव मुनिलाई प्रसन्न गराउनका लागि मैले फेरि उहीं जानुपर्छ ।'

यो विचार गरेर राजा अब यस पटक एक हजार गाई , एउटा सुनको कण्ठहार, खच्चरहरू नारिएको एक रथ र आफ्नी छोरीलाई लिएर फेरि मुनिकहाँ  गए र हात जोडेर भन्न लागे–'हे भगवान् ! यी सारा मैले तपाईंका निमित्त ल्याएको हुँ । यिनलाई तपाईंले स्वीकार गर्नुस् र धर्मपत्नीको रूपमा मेरी यी छोरी र जहाँ तपाईं बस्नुभएको छ, यो गाउँ पनि ग्रहण गर्नुहोस् । त्यसभन्दा पछि तपाईं जुन देवको उपासना गर्नुहुन्छ, तिनका विषयमा मलाई उपदेश दिनुहोस् ।'

राजाको कुरा सुनेर, कन्याको करुणामय स्थिति देखेर मुनिले उनलाई आश्वासन दिएर भने–'हे शूद्र ! तैंले फेरि यी सारा वस्तु मेरालागि ल्याएको छस् ? (के यिनीहरूबाटै ब्रह्मज्ञान किन्न सकिन्छ ?)' राजा चुप लागेर बसे । केही समयपछि मुनिले राजालाई धनको अभिमानदेखि टाढा भएको जानेर ब्रह्मविद्याको उपदेश  गरे । मुनि रैक्व जहाँ बस्दथे, त्यो पुण्यप्रदेशको नाम रैक्वपर्ण भयो ।

(छन्दयोग्य उपनिषद्को आधारमा)



* शोकले विकल हुनाको कारण राजालाई मुनिले शूद्र भने ।

# (५) गाईसेवाबाट ब्रह्मज्ञान

जबाला नाम भएकी एक सदाचारी ब्राह्मणी थिइन् । उनका सत्यकाम नाम गरेका एक जना पुत्र थिए । जब उनी विद्याध्ययन गर्न योग्य भए, तब एक दिन उनले गुरुकुल जाने इच्छाले आफ्नी आमासँग सोधे–'हे पूजनीय आमा ! म ब्रह्मचर्य पालना गर्दै गुरुको सेवामा बस्न चाहन्छु, परन्तु गोत्र भने जान्दिनँ, अतएव मेरो गोत्र के हो, त्यो मलाई बताउनुहोस् ।'

जबालाले भनिन्–'छोरा ! तिमी कुन गोत्रका हौ, यो कुरा म जान्दिनँ । मेरो जवानीमा जब तिमी जन्मेका थियौ, तब मेरा स्वामी (पतिदेव)का घरमा धेरै नै अतिथि आउने गर्दथे । मेरो सारा समय तिनको सेवामा नै बित्दथ्यो, यसैले मलाई तिम्रो पितासँग गोत्र सोध्ने त समयनै पाइएन, अतएव म तिम्रो गोत्र जान्दिनँ । मेरो नाम जबाला हो र तिम्रो सत्यकाम । बस्, म यत्ति जान्दछु । तिमीसँग आचार्यले सोध्नुभयो भने भनिदेऊ– 'म जबालाको छोरा सत्यकाम हुँ ।'

आमाको आज्ञा लिएर सत्यकाम महर्षि हारिद्रुमत गौतम ऋषिको घरमा गए र प्रार्थना गरेर भने कि 'हे भगवान् ! म ब्रह्मचर्यको पालन गर्दै तपाईंका समीपमा बसेर सेवा गर्न चाहन्छु । मलाई स्वीकार गर्नुहोस् ।' गुरुले बडो स्नेहले सोध्नुभयो–'हे सौम्य ! तिम्रो गोत्र के हो ?' सरल सत्यकामले नम्रतापूर्वक भने–'भगवान् ! मेरो गोत्र के हो, यसका विषयमा म जान्दिनँ । मैले यहाँ आउने बेलामा आमासँग सोधेको थिएँ, तब आमाले भन्नुभयो कि 'म युवावस्थामा हुँदा घरमा अनेकौं अतिथिहरूको सेवामा लागिरहनु पर्नाको कारण स्वामीसँग गोत्र सोध्नै सकिनँ । युवावस्थामा जब तिमी जन्मेका थियौ, त्यसै समयमा तिम्रो पिताको मृत्यु भइसकेको थियो, यसकारण शोक र दुःखले पीडित हुनाको कारण अरुसँग पनि तिम्रो गोत्र सोध्न सकिनँ । म केवल कति मात्र जान्दछु भने मेरो नाम जबाला हो र तिम्रो नाम सत्यकाम हो ।' अतएव हे भगवान् ! म जबालाको पुत्र सत्यकाम हुँ ।'

सत्यवादी सरल हृदय सत्यकामको सोझो र सत्य कुरा सुनेर ऋषि गौतमले प्रसन्न भएर भन्नुभयो–'वत्स ! ब्राह्मणलाई छोडेर अरु कोही पनि यसप्रकार सरल भावले साँचो कुरा भन्न सक्दैनन् । **'नैतदब्राह्मणो विवक्तुमर्हति'**–यस्तो सत्य र कपटरहित वचन बोल्ने तिमी निश्चय पनि ब्राह्मण नै हौ । म तिम्रो उपनयन संस्कार गरिदिन्छु । जाऊ, अलिकति समिधा लिएर आऊ ।'

विधिवत् संस्कार भएपछि वेदाध्ययन गराएर ऋषि गौतमले आफ्नो गौशालाबाट चार सय दुब्ला–पातला गाई छानेर अधिकारी शिष्य सत्यकामलाई भन्नुभयो–'पुत्र ! तिमी यी गाईहरूलाई चराउनका लागि वनमा लिएर जाऊ । हेर, जबसम्म यिनको सङ्ख्या पूरा एक हजार हुँदैन, तबसम्म तिमी फर्केर नआउनू ।' सत्यकामले प्रसन्न भएर भने–'हे भगवान् ! जबसम्म यी गाईहरूको सङ्ख्या पूरा एक हजार हुँदैन, तबसम्म म फर्केर आउन्नँ ।' **'नासहस्रेणावर्तेयति'**–यति भनेर सत्यकाम गाईहरूलाई लिएर जुन वनमा घाँसपानी प्रशस्त पाइन्छ, त्यतैतिर गए र त्यहीँ नै कुटी बनाएर वर्षौंसम्म ती गाईहरूको तनमनले खुब सेवा गर्न लागे ।

गुरुभक्तिको कति सुन्दर दृष्टान्त हो यो । ब्रह्मज्ञान प्राप्त गर्ने इच्छा भएका शिष्यलाई गाई चराउनका लागि वनमा पठाइदिने र शिष्य चुपचाप आज्ञा पालना गर्दै वर्षौंसम्म निर्जन वनमा बस्नका लागि गए । यो कुरा ज्ञानपिपासु गुरुभक्त भारतीय ऋषिकुमारहरूमा नै पाइन्छ । आजको संस्कृति त यसभन्दा सर्वथा विपरीत छ, अस्तु !

सेवा गर्दागर्दा गाईहरूको सङ्ख्या पूरा एक हजार भएछ । त्यसपछि एकदिन एउटा साँढेले आएर भन्यो– 'सत्यकाम !' सत्यकामले उत्तर दिए– 'भगवान् ! के आज्ञा छ ?' साँढेले भन्यो–'वत्स ! हाम्रो सङ्ख्या एक हजार भयो, अब हामीलाई गुरुका घरमा लैजाऊ, म तिमीलाई ब्रह्मको एक पाउको उपदेश दिन्छु ।' सत्यकामले भने–'भन्नुहोस् भगवान् !' त्यसपछि वृषभले ब्रह्मको एक पाउको उपदेश दिएर भने–'यिनको नाम 'प्रकाशवान्' हो । अगाडिको उपदेश तिमीलाई अग्निदेवले गर्नेछन् ।'

अर्कोदिन प्रातकाल: सत्यकाम गाईहरूलाई धपाउँदै अगाडि लागे । साँझको समयमा बाटामा अवरोध सिर्जना गरेर उनले गाईहरूलाई त्यहीँ नै रोके र तिनीहरूलाई पानी खुवाए र राति बस्ने व्यवस्था गरे । त्यसपछि वनमा गएर दाउरा बटुलेर आगो बालेर पूर्वतिर फर्केर बसे । अग्निदेवले तीन पटक भन्नुभयो–'हे सत्यकाम !' सत्यकामले उत्तर दिए–'भगवन् ! के आज्ञा छ ?' अग्निले भन्नुभयो–'हे सौम्य, म तिमीलाई ब्रह्मको द्वितीय पाउको उपदेश गर्दछु ।' सत्यकामले भने–'गर्नुहोस्, भगवन् ।' त्यसपछि अग्निले ब्रह्मको दोस्रो पाउको उपदेश गर्दै भन्नुभयो–'यिनको नाम 'अनन्तवान्' हो । अगाडिको उपदेश तिमीलाई हाँसले गर्नेछन् ।'

सत्यकामले रातभर उपेदेशको मनन गर्दै रहे । प्रात:काल गाईहरूलाई धपाएर अगाडि बढे र साँझ परेपछि कुनै राम्रो पानी भएको ठाउँमा पुगेर गाईहरूलाई रोके । गाईहरूका लागि राति बस्ने–खाने व्यवस्था गरे र आफू आगो बालेर पूर्वपट्टि फर्केर बसे । यत्तिकैमा एउटा हाँस माथिबाट उड्दै आयो र सत्यकामको नजिकै बसेर भन्यो–'सत्यकाम !' सत्यकामले भने–'भगवान्, के आज्ञा छ ?' हाँसले भन्यो–'हे सत्यकाम ! म तिमीलाई ब्रह्मको तेस्रो पाउको उपदेश गर्दछु ।' सत्यकामले भने–'भगवन् ! कृपागरी भन्नुहोस् ।' त्यसपछि हाँसले ब्रह्मको तेस्रो पाउको उपदेश भन्यो–'यसको नाम 'ज्योतिष्मान्' हो । यसभन्दा पछिको उपदेश तिमीलाई जलमुर्गले गर्ने छन् ।

रातमा सत्यकाम ब्रह्मकै चिन्तनमा लागिरहे । बिहान उठेर गाईहरूलाई धपाउँदै अगाडि बढे र साँझ परेपछि एउटा वरको रुखमुनि बसे । गाईहरूका लागि उचित व्यवस्था गरेर उनी आगो बालेर पूर्वतिर फर्केर बसे । यत्तिकैमा एउटा जलमुर्ग आएर भन्यो–'सत्यकाम !' सत्यकामले उत्तर दिए–'भगवान् ! के आज्ञा छ ?' जलमुर्गले भने–'बाबु ! म तिमीलाई ब्रह्मको चौथो पाउको उपदेश गर्दछु ।' सत्यकामले भने–'प्रभो, गर्नुहोस् ।' त्यसपछि जलमुर्गले 'आयतनवान्'रूपले ब्रह्मको उपदेश दिए ।

यसप्रकार, सत्य, गुरुसेवा र गाईको सेवाको प्रतापले वृषभरूप वायु, अग्निदेव, हंसरूप सूर्यदेव र मूर्गरूप प्राणदेवताबाट ब्रह्मज्ञान प्राप्त गरेर सत्यकाम एक हजार गाईहरूको ठूलो बथान लिएर आचार्य गौतमका आश्रममा पुगे । त्यसबेला उनको मुखमण्डलमा ब्रह्मतेज जाज्वल्यमान भएको थियो, आनन्दका हजारौँ–हजार किरणहरू झल्मलाइरहेका थिए । गुरुले सत्यकामको चिन्तारहित तेजपूर्ण दिव्य मुखकान्तिलाई देखेर भन्नुभयो– 'बाबु सत्यकाम ! उनले उत्तर दिए–'भगवान् !' गुरुले भन्नुभयो–'हे सौम्य ! तिमी त ब्रह्मज्ञानीजस्तै पो देखिएका छौ नि । बाबु ! तिमीलाई कसले उपदेश दिए ?' सत्यकामले भने 'भगवान्, मलाई मनुष्यभन्दा अरुले नै उपदेश दिनुभएको हो ।' यति भनेर उनले सारा हाल सुनाइदिए र भने– 'भगवान् ! मैले सुनेको छु कि **'भगवद्दृशेभ्य आचार्याद्धचेव विद्या विदिता साधिष्ठम्.....।** '

'तपाईंजस्तै आचार्यद्वारा प्राप्त गरिएको विद्या नै श्रेष्ठ हुन्छ, अतएव मलाई तपाईं नै पूर्णरूपले उपदेश दिनुहोस् ।' गुरु प्रसन्न हुनुभयो र उहाँले भन्नुभयो–'वत्स ! तिमीले जेजति उपदेश प्राप्त गऱ्यौ, यही नै ब्रह्मतत्त्व हो । अब तिम्रालागि कत्ति पनि जान्न बाँकी छैन ।'

(छान्दोग्य उपनिषद्को आधारमा)



# (६) अग्निद्वारा उपदेश

कमलका छोरा उपकोसल सत्यकाम जाबालकहाँ गएर उहाँको शिष्यत्व स्वीकार गरेर उहीं बस्न थाले । उनले पूरा बाह्र वर्षसम्म गुरुको अग्निको सेवा गरे । गुरुले अर्का शिष्य ब्रह्मचारीहरूको समावर्तन (वेदाध्ययन पूर्ण गराएर) गरेर उनीहरूलाई घर जानका लागि आज्ञा दिनुभयो, तर उपकोसलहरूलाई आज्ञा दिनुभएन ।

उपकोसलका मनमा केही विषाद भयो । यो देखेर गुरूपत्नी (गुरुआमा)का मनमा दया लाग्यो । उहाँले स्वामीसँग भन्नुभयो–'यी ब्रह्मचारीले ब्रह्मचर्यको नियमको पालना गरेका छन् र श्रद्धापूर्वक वेदाध्ययन गरेका छन् तथा तपाईंको अग्निको राम्रोसँग सेवा पनि गरेका छन्, अतएव यिनको समावर्तन गरेर यिनको कामना पूर्ण गरिदिनुहोस् । होइन भने यी अग्निले तपाईंलाई निन्दा गर्नेछन् ।' सत्यकामले कुरा सुनेनसुनेको गरिदिए र केही कुरा नभनीकनै यात्राका लागि घरबाट निस्के ।

उपकोसललाई यसले गर्दा असाध्य दुःख लाग्यो । उनी मानसिक रोगले दुःखी भए र अन्न खान छोडेर अनशनव्रत गर्न लागे । स्नेहमयी गुरूपत्नीले भन्नुभयो–'हे ब्रह्मचारी ! तिमी भोजन गर । के कारणले भोजन गर्दैनौ ?' उनले भने–'मेरा मनमा अनेक कामनाहरू छन्, म अनेक प्रकारका मानसिक दुःखहरूबाट ग्रस्त भएको छु । अतः म केही पनि खान सक्दिनँ ।' गुरूपत्नी चुप लाग्नुभयो ।

अग्निहरूले के विचार गरे भने यी तपस्वी ब्रह्मचारीले मन लगाएर हाम्रो धेरै सेवा गरेका छन्, अतएव यिनको कामनालाई हामीहरू पूर्ण गरौं । यो विचार गरेर अग्निहरूले उनलाई बेग्लाबेग्लै ब्रह्मविद्याको यथोचित उपदेश गरे । उपदेश गरेपछि सबै अग्निहरूले मिलेर उनलाई भने–'हे सौम्य उपकोसल ! हामीले तिमीलाई अग्नि तथा आत्माको यथार्थ

उपदेश दिएका छौँ, अब तिम्रा आचार्य आएर तिमीलाई यस विद्याको फलको उपदेश दिनुहुन्छ ।'

केही दिनपछि गुरु यात्राबाट फर्केर आउनुभयो । उहाँले चेलालाई बोलाउनुभयो–'उपकोसल !' उनले भने–'भगवन् !'

उपकोसलको मुख ब्रह्मतेजले देदीप्यमान भइरहेको थियो, उनका सारा इन्द्रिय सात्त्विक प्रकाशले प्रकाशित थिए, यो देखेर आचार्यले खुसीले भरिएर सोध्नुभयो–'छोरा उपकोसल ! तिम्रो मुहार त ब्रह्मज्ञानीहरूको जस्तै चम्किरहेको छ; तिमीलाई कसले ब्रह्मको उपदेश दियो ?' कुनै मनुष्यले उपकोसलाई उपदेश दिएका थिएनन्, त्यसैले उनले स्पष्ट नभनेर साङ्केतिक भाषामा भने–'भगवान् ! तपाइँविना मलाई कसले उपदेश दिनु र ? यी अग्निहरू पहिले मानौँ अर्कै प्रकारका थिए, अब तपाईंलाई देखेर मानौँ डराइरहेका जस्ता छन् । सङ्केतको अर्थ सम्झेर आचार्यले भन्नुभयो–'वत्स ! अग्निहरूले तिमीलाई के उपदेश दिए ?' उपकोसलले अग्निहरूबाट जेजति प्राप्त गरेका थिए, सब भनिदिए । सुनेर गुरुले भन्नुभयो–'वत्स ! यी अग्निहरूले त तिमीलाई लोकसम्बन्धी नै उपदेश गरेछन् । म तिमीलाई यो पूर्णब्रह्मको उपदेश गर्दछु, जसको साक्षात्कार भएपछि जस्तो कमलको पातमा जलको स्पर्श हुँदैन, त्यस्तै नै उसमा पापले छुनै सक्दैन ।' चेलाले भने–'भगवान्, तपाईं उपदेश गर्नुहोस् ।'

यसभन्दा पछि आचार्यले उपकोसललाई ब्रह्मको रहस्यमय सम्पूर्ण उपदेश दिनुभयो र उनको समावर्तन गरेर उनलाई घर जाने आज्ञा दिनुभयो ।

(छान्दोग्य–उपनिषद्को आधारमा)



# (७) निरभिमानी शिष्य

उपमन्युका छोरा प्राचीनशाल, पुलुषका छोरा सत्ययज्ञ, भल्लवका छोरा इन्द्रद्युम्न, शर्कराक्षका छोरा जन र अश्वतराश्विका छोरा बुडिल– यी पाँच महाशाल अर्थात् जसका पाठशाला(घर)मा असङ्ख्य विद्यार्थी पढ्थे, यस्ता महान् शाला भएका महान् श्रोत्रिय वा वेदको पठन–पाठन गर्ने खालका हुन् । एक दिन यिनीहरू एकै ठाउँमा जम्मा भएर वास्तवमा आत्मा के हो र ब्रह्म के हो, यसमा विचार गर्न लागे । परन्तु, जब कुनै निर्णयमा पुग्न सकेनन्, तब कुनै अर्कै ब्रह्मवेत्ता विद्वान्कहाँ गएर उहाँसँग सोध्ने निश्चय गरेर आपसमा के भन्न लागे भने–'वर्तमान समयमा अरुणका छोरा उद्दालक आत्मरूप वैश्वानरलाई राम्रोसँग जान्दछन्, यदि सबैको एकमत छ भने हामी उहाँकहाँ नै जानुपर्छ ।' सबैको विचार मिल्यो र तिनीहरू उद्दालकका समीपमा गए ।

उद्दालकले तिनीहरूलाई टाढाबाट देखेर नै तिनीहरू किन आएका हुन् भन्ने कुरा थाहा पाइसके र उनी विचार गर्न लागे–'यी महाशाल र महान् श्रोत्रिय आउँदासाथै मसँग सोध्नेछन् र म यिनका प्रश्नहरूको पूर्ण समाधान गर्न सक्दिनँ । यसकारण उत्तम कुरा त के हुन्छ भने म यिनीहरूलाई अरु कुन योग्य पुरुषको नाम बताइदिऊँ ।' यस्तो विचार गरेर उद्दालकले उनीहरूसँग भने –'हे भगवान् ! तपाईँहरू मसँग आत्माका विषयमा केही सोध्नका लागि पाल्नुभएको हो भन्ने मैले थाहा पाइसकेँ, परन्तु यस समयमा केकयका छोरा प्रसिद्ध राजा अश्वपति यो आत्मरूप वैश्वानरलाई राम्ररी जान्दछन्, यदि तपाईंहरू सबैको अनुमति हुन्छ भने हामी सबै जना उहाँकहाँ जाऔँ ।' सर्वसम्मतिले ती छ जना ऋषिहरू–अतिथिहरूको आफ्ना सेवकहरूद्वारा यथायोग्य बेग्लाबेग्लै राम्रोसँग पूजन–सत्कार गराए र भोलिपल्ट प्रातःकाल राजा उठ्नासाथै उनीहरूकहाँ गए र धेरै नै धन नजिक राखेर विनयभावले त्यो धन लिनका लागि प्रार्थना गर्न लागे । परन्तु तिनीहरू त धनको इच्छाले त्यहाँ गएका थिएनन्, त्यसैले उनीहरूले

धनलाई छुनसम्म पनि छोएनन् र चुपचापसँग बसिरहे । राजाले के विचार गरे भने सायद यिनीहरू मलाई अधर्मी या दुराचारी भन्ने ठानेर मेरो धन (दूषित सम्झेर) नलिएका हुन् । यो विचार गरेर राजाले भने–

**न मे स्तेनो जनपदे न कदर्यो न मद्यपः ।**
**नानाहिताग्निर्नाविद्वान् न स्वैरी स्वैरिणी कुतः ॥**

'हे मुनिहरू ! मेरा राज्यमा कोही चोर छैनन्, किनभने कसैसँग पनि कुनै कुराको पनि अभाव छैन, कारण मेरो देशमा यस्तो कोही धनी पनि छैनन्, जो कन्जुस भएर यथायोग्य दान गर्दैनन्, न मेरो देशमा कोही जाँडरक्सी खान्छन्, न त अग्निहोत्र नगर्ने ब्राह्मण नै छन्, यस्तो कुनै व्यक्ति छैन, जो विद्वान् नभएको होस्, न ता मेरो देशमा कोही व्यभिचारी पुरुष नै छन् । जब पुरुष नै व्यभिचारी छैनन् भने स्त्री व्यभिचारिणी हुने त कुरै भएन । अतएव मेरो धन शुद्ध छ, फेरि तपाईंहरू किन लिनुहुन्न ?'[१] मुनिहरूले केही पनि उत्तर दिनुभएन । तब राजाले विचार गरे, सायद धन थोरै ठानेर नलिएको होला, अतएव उनले फेरि भन्न लागे–

'हे भगवन् ! म एक यज्ञ आरम्भ गर्दै छु, त्यस यज्ञमा म एकएक ऋत्विक्लाई जति धन दिन्छु, त्यति नै तपाईंहरू प्रत्येकलाई दिन्छु । तपाईंहरू मकहाँ नै बस्नुहोस् र मेरो यज्ञ हेर्नुहोस् ।'

राजाको यस्तो कुरा सुनेर उनीहरूले भने–'हे राजन्, मनुष्य जुन प्रयोजनका लागि जसकहाँ जान्छन्, उनको त्यही प्रयोजन पूरा गर्नुपर्दछ । हामीहरू तपाईंकहाँ आत्मरूप वैश्वानरको ज्ञान प्राप्त गर्ने इच्छाले आएका हौं, किनभने अहिले तपाईं नै यसलाई राम्ररी जान्नुहुन्छ । यसकारण, हामीलाई त्यही ज्ञान दिनुहोस् । हामीलाई धन चाहिएको छैन ।'[२]

---

१– राजाहरूले यस आदेशमा विचार गर्नुपर्दछ र यहीअनुसार आफ्नो राज्यको एकएक पैसालाई शुद्ध बनाउनुपर्दछ ।

२– यसैगरी जिज्ञासु साधकले कुनै पनि प्रलोभनमा नफँसेर आफ्नो लक्ष्यमा दृढ रहनुपर्दछ ।

राजाले उनीहरूसँग भने–'हे मुनिहरू हो ! भोलि बिहान म तपाईंहरूलाई यसको उत्तर दिनेछु ।' ज्ञानको प्राप्तिका लागि अभिमानलाई त्याग गर्न आवश्यक छ, केवल मुखले माग्दैमा ज्ञान पाइँदैन । त्यो त अधिकारीलाई मात्र प्राप्त हुन्छ । राजाको उत्तरले मुनिहरूले यो कुरा बुझेर भोलिपल्ट अभिमान त्यागेर सेवावृत्तिको परिचय दिने विचारले हातमा समिधा हातमा लिएर बिहानै नम्रतापूर्वक शिष्यभावले सबै जना राजाकहाँ पुगे र जाँदासाथै राजाका पाउमा प्रणाम गर्न लागे । राजाले आफ्नो गोडामा प्रणाम गर्न दिएनन्, किनभने एक त उनीहरू ब्राह्मण थिए, अर्को कुरा सद्गुरुले मान–बढाइ–पूजाको इच्छा राख्दैनन् । त्यसपछि राजाले उनीहरूलाई गुरुरूपले होइन, किन्तु दाताको रूपले वैश्वानररूप ब्रह्मविद्याको उपदेश दिए ।

(छान्दोग्य–उपनिषद्को आधारमा)



# (८) 'तत्त्वमसि'

'अरुणका छोरा आरुणि उद्दालकका श्वेतकेतु नाम गरेका एक जना छोरा थिए ।' उनी बाह्र वर्षको उमेरसम्म केवल खेलकुदमा नै मस्त भए । बाबुले सोच्नुभएको थियो कि उनी आफैँ नै विद्या प्राप्त गर्नका लागि इच्छा गरून् । यो नै उत्तम हुनेछ, तर उनले यस्तो इच्छा गरेनन्, पिताले भनेजस्तो भएन । बाबुले एक दिन छोरालाई बोलाएर भने–'हे बाबु श्वेतकेतु ! तिमी सुयोग्य गुरुकहाँ गएर ब्रह्मचारी भएर बस । हे सौम्य, हाम्रो वंशमा वेद नपढेका ब्राह्मणको गुण र आचारदेखि रहित भएका, केवल नामधारी ब्राह्मण बनेर बसेका कोही पनि उत्पन्न नै भएनन् । यस्तो गर्नु योग्य छैन । सारांश के हो भने तिमीले वेदको अध्ययन गर्नुपर्दछ र ब्रह्मज्ञान गर्नुपर्दछ ।'

पिता आरुणिको यो मीठो दुःखेसो सुनेर श्वेतकेतु बाह्रवर्षको अवस्थामा गुरुको आश्रममा गए र पूरा चौबीस वर्षको अवस्थासम्म गुरुकै घरमा बसेर व्याकरणादि छ अङ्गसहित चारै वेदको पूर्ण अध्ययन गरेपछि गुरुको आज्ञा लिएर घर फर्के । उनले मनमनै के विचार गरे भने 'म वेदको पूर्ण ज्ञाता हुँ, म बराबरको पण्डित अरु कोही छैनन् । म सर्वोपरि विद्वान् र बुद्धिमान् हुँ ।' यसप्रकारको विचारले उनको मनमा गर्व उत्पन्न भयो र उनी उद्धत र विनयरहित भएर दण्डवत् प्रणाम केही नगरी पिताको अगाडि आएर ठस्स बसे । आरुणि ऋषिले छोराको नम्रतारहित औद्धत्यपूर्ण आचरण देखेर यसलाई वेदको अध्ययनले ठूलो गर्व भएको छ भन्ने कुरा बुझे, तापनि आरुणि ऋषि त्यो अविनयी छोरादेखि रिसाएनन् र भने–'हे श्वेतकेतु ! तिमीले आफूलाई सबभन्दा बढी पण्डित सम्झेर यति अभिमानी बनाउने के पढेर आयौ ? विद्याको स्वरूप त विनयबाट देखिन्छ । अभिमानी पुरुषको हृदयबाट त सारा गुण पर सरेर जान्छन् र समस्त दोष स्वतः नै आफूमा आउँछन् । तिमीले आफ्ना गुरुबाट सिकेका छौ भने भन त एउटा

कुरा जानेपछि अरु नसुनेका, नसिकेका सम्पूर्ण जानिन्छ, एउटाको विचारले विचारै नगरेका सारा वस्तुको विचार गरिन्छ, एउटा कुराको ज्ञानले नजानेका सारा वस्तुको ज्ञान हुन्छ, त्यस्तो ज्ञान तिमीले गुरुबाट सिकेका छौ ?'

आरुणिको यस्तो कुरा सुन्दासाथै श्वेतकेतुको गर्व चकनाचुर भयो । उनले के विचार गरे भने–'म त यस्तो कुनै वस्तु जान्दिनँ । मेरो अभिमान मिथ्या रहेछ ।' उनी नम्र भएर पिताका चरणमा प्रणाम गरे र हात जोडेर भन्न लागे–'भगवन् ! जुन एक वस्तुको श्रवण, विचार र ज्ञानले सम्पूर्ण वस्तुहरूको श्रवण, विचार र ज्ञान हुन्छ, त्यस्ते वस्तुलाई म जान्दिनँ । तपाईं त्यस वस्तुको उपदेश गर्नुहोस् ।'

आरुणिले भने–'हे सौम्य ! जस्तो कारणरूप माटाको डल्लाको ज्ञान भयो भने सारा बनेका कार्यरूप घैंटा, गाग्रा आदि समस्त वस्तु (भाँडाकुँडा)को ज्ञान हुन्छ र के कुरो पत्ता लाग्छ भने घडा आदि कार्यरूप वस्तुहरू सत्य होइनन्, केवल वाणीका विकार मात्र हुन् । सत्य त माटो मात्र हो भन्ने कुराको ज्ञान हुन्छ । हे सौम्य ! जस्तो कारणरूप सुनको डल्लाको ज्ञान भयो भने सुनबाट बनेका बाला, कुण्डल आदि सत्य होइनन्, केवल वाणीका विलासमात्र हुन्, सत्य त केवल सुन नै हो र जस्तो नङ काट्ने नङ्कटी आदिमा भएको फलामको ज्ञान भयो भने फलामका कार्य खुकुरी, बन्चरो आदिको ज्ञान हुन्छ र यी सारा वास्तवमा सत्य होइनन् । सत्य त फलाममात्र हो भन्ने कुराको ज्ञान हुन्छ, यसैगरी सारा ज्ञान हो ।'

पिता आरुणिको कुरा सुनेपछि श्वेतकेतुले भने–'बाबा ! निश्चय नै मेरा विद्वान् गुरु यी कुरा जान्नुहुन्थेन, किनभने यदि उहाँले जानेका भए मलाई नबताइकन छोड्नुहुन्थेन । अतएव हे भगवान् ! अब तपाईं नै मलाई एक वस्तु जानेपछि सारा वस्तु जानिने वस्तु के हो, त्यसको उपदेश दिनुहोस् ।' आरुणिले भने– 'ठीक छ, सावधान भएर सुन ।'

'हे प्रियदर्शन, यो नाम, रूप र क्रियारूप दृश्यमान् जगत् उत्पन्न हुनुभन्दा पहिले एक, अद्वितीय, सत् नै थियो । त्यो सत् ब्रह्मले सङ्कल्प गरे कि 'म एक नै धेरै बनूँ' । यस्तो सङ्कल्प गरेर उनले पहिले तेज उत्पन्न गरे, फेरि उनले जल उत्पन्न गरे र त्यसपछि उनले अन्न उत्पन्न गरे । तिनै तीन तत्त्वबाट सारा पदार्थ उत्पन्न भए । जगत्मा जति वस्तुहरू छन्, सबैमा तेज, जल र अन्नको प्रधानता छ र जहाँ कठोरता छ, त्यहाँ अन्न वा पृथ्वीको प्रधानता छ । आगामा जुन रातो, सेतो र कालो वर्ण छ, त्यो रातोपन तेजको, सेतो जलको र कालोपन पृथ्वीको हो । यही कुरा सूर्य, चन्द्रमा र बिजुलीमा छ । यदि आगो, सूर्य, चन्द्रमा र बिजुलीबाट तेज, पानी र पृथ्वीलाई निकालिदिने हो भने आगोमा तातोपन, सूर्यमा उज्यालोपन, चन्द्रमामा शीतलता र विद्युत्मा चमकन्नता केही पनि बाँकी रहँदैन । यसैप्रकारले सबै वस्तुमा बुझ्नुपर्दछ । खाएका अन्नमा पनि तीन रूप छन् । स्थूलभाग विष्ठा बन्दछ, माध्यभाग मासु बन्दछ र सूक्ष्मभाग मनरूप हुन्छ । यसैगरी, पानीको स्थूलभाग मूत्र बन्दछ, मध्यभागबाट रगत बन्दछ र सूक्ष्मभागबाट प्राण बन्दछ । यसैगरी, तेल, घिऊ आदि तैजस पदार्थको स्थूलभागबाट हाड बन्दछ, मध्यभागबाट मज्जा बन्दछ र सूक्ष्मभागबाट वाणी बन्दछ । अतएव मन अन्नमय हो, प्राण जलमय हो र वाणी तेजमय हो, अर्थात् मन अन्नबाट बन्दछ, प्राण पानीबाट बन्दछ भने वाणी तेजबाट बन्दछ ।'

यसमा श्वेतकेतुले भने–'हे पिताश्री ! मलाई यो विषय अझ स्पष्ट गरेर बताइदिनुहोस् ।' उद्दालक आरुणिले भने–'हे सौम्य ! जस्तो दही मथ्यो भने त्यसको सूक्ष्म सार तत्त्व नौनी माथिमाथि आउँछ, यस्तै प्रकारले जुन अन्न खाइन्छ, त्यसको सूक्ष्म सार अंश मन बन्दछ जलको सूक्ष्म अंश प्राण र तेजको सूक्ष्म अंश वाणी बन्दछ । साँच्चै भन्ने हो भने यो मन, प्राण र वाणी तथा यिनको कारण अन्नादि कार्यकारण परम्पराबाट

आउँदा मूलमा एकै सत् वस्तु थियो, छ भन्ने ठहरिन्छ । सबैको मूल कारण सत् हो, त्यही नै परम आश्रय र अधिष्ठान हो । सत्को कार्य नाना प्रकारका आकृतिहरू सब वाणीका विकार हुन्, नाममात्र हुन् । यो सत् अणुजस्तै सूक्ष्म छ, समस्त जगत्को आत्मरूप हो । जस्तो डोरीमा सर्प कल्पित हो । यसैगरी, जगत् यही 'सत्'मा कल्पित छ । हे श्वेतकेतु ! त्यो 'सत्' वस्तु तिमी नै हौ ।'तत्त्वमसि' ।

'हे सौम्य ! जस्तो मह बनाउने मौरी अनेक प्रकारका वृक्षहरूको फूलको रसलाई जम्मा गरेर त्यसलाई एक रस गरेर महका रूपमा परिणत गर्दछ, महरूपमा प्राप्त रसलाई जस्तो म आँपको रुखको फूलको रस हुँ वा कटहरको फूलको रस हुँ भनेर जान्दैन, भन्न सक्दैन । यसैप्रकार सुषुप्तिकालमा जीव सत् वस्तुसँगै एकीभावमा प्राप्त भएर पनि म सत्भावमा मिलेको छु भनेर जान्दैन । सुषुप्तिबाट जागेपछि फेरि ती जीव आआफ्नो पहिलेको बाघ, सिंह, हुँडार, सुँगुर, कीरा, पुतली र लामखुट्टे आदिको शरीरमा प्राप्त हुन्छन् । यो जुन सूक्ष्मतत्त्व हो, यही आत्मा हो, यही सत् हो र हे श्वेतकेतु ! त्यो तिमी नै हौ–'तत्त्वमसि ।'

श्वेतकेतुले भने–'भगवन् ! मलाई फेरि सम्झाउनुहोस् ।' आरुणिले भने 'हे सौम्य ! जसरी समुद्रको पानीबाटै बादलले पुष्ट भएका गङ्गा आदि नदीहरू अन्तमा समुद्रमै मिलेर आफ्नो नामरूपलाई त्यागिदिन्छन्, के जान्दैनन् भने 'म गङ्गा हुँ', 'म नर्मदा हुँ', मात्र समुद्रभावलाई प्राप्त गर्दछन् । त्यसपछि बादलमार्फत वर्षारूपमा समुद्रदेखि बाहिर आउँछन्, तर के जान्दैनन् भने हामी समुद्रबाटै निस्किएका हौँ । यसैगरी, यी जीव पनि 'सत्'बाटै निस्किएर 'सत्'मै लीन हुन्छन् र पुनः त्यसैबाट निस्कन्छन्, तर के जान्दैनन् भने हामी 'सत्'बाटै आएका हौँ र यहाँ त्यही बाघ, सिंह, वृक, सुँगुर, कीट, पतङ्ग र लामखुट्टेलगायत जेजे पहिला हुन्छन्, त्यही हुन्छन् । यो जुन सूक्ष्मतत्त्व सबैको आत्मा हो, यही सत् हो, यही आत्मा हो र 'हे श्वेतकेतु ! त्यो सत् तिमी नै हौ ।' 'तत्त्वमसि' ।

श्वेतकेतुले भने–'भगवन्! मलाई फेरि बुझाउनुस् ।' उद्दालक आरुणिले 'तथास्तु' भनेर फेरि बुझाउन लागे–

'हे सौम्य! यदि कसैले ठूलो रुखको जरामा चोट लगायो भने त्यो एकै चोटमा सुक्दैन, त्यो बाँचेकै हुन्छ र चोट लागेको ठाउँबाट रस बग्दछ । रुखको बीचमा प्वाल पारे पनि त्यो सुक्तैन, प्वालबाट रस बग्दछ । यसैगरी, अगाडिको भागमा चोट लगाउनाले पनि यो जिउँदै हुन्छ र त्यसबाट रस बग्दछ । जबसम्म उसमा जीवात्मा व्याप्त रहन्छ, तबसम्म त्यसले जराबाट पानी लिइरहन्छ, तबसम्म आनन्दले रहन्छ । जब यो रुखका हाँगाहरूमध्ये एउटा हाँगाबाट जीव निस्केर जान्छ, तब त्यो सुक्दछ । दोस्रोबाट निस्केर गएपछि दोस्रो र तेस्रोबाट निस्केर गएपछि तेस्रो हाँगा सुक्दछ र सारा वृक्षलाई जीवले त्यागिदिन्छ, तब त्यो सबै नै सुक्दछ । यसैप्रकार, यो शरीर पनि जब जीवदेखि रहित हुन्छ, तब मर्दछ । जीव कहिल्यै पनि मर्दैन, यो जीवरूप सूक्ष्मतत्त्व नै आत्मा हो । यही सत् हो, यही आत्मा हो र हे श्वेतकेतु ! त्यो सत् तिमी नै हौ–'तत्त्वमसि' ।

श्वेतकेतुले भने 'भगवन्! मलाई फेरि सम्झाउनुस् ।' पिता आरुणिले भने–'ठीक छ, एउटा ठूलो फल टिपेर ल्याऊ । फेरि तिमीलाई म सम्झाउँला ।' श्वेतकेतुले फल लिएर आए । पिताले भन्नुभयो–'यसलाई छोडाएर हेर, यसमा के छ ?' श्वेतकेतुले फल छोडाएर भने–'भगवन्, यसमा सानासाना बियाँ छन् ।' ऋषिले भने–'ठीक छ, एउटा बियाँलाई छोडाएर(फुटाएर) हेर त त्यसमा के छ ?' श्वेतकेतुले बियाँलाई छोडाएर भने–'यसमा त केही पनि देखिँदैन ।' तब पिता आरुणिले भने–'हे सौम्य ! तिमी यो वटबीजको सूक्ष्मभावलाई देख्न सक्दैनौ, यो अत्यन्त सूक्ष्म तत्त्वबाट नै महान् वरको वृक्ष आउँछ । बस्, जस्तो यो अत्यन्त सूक्ष्म वटबीज बडेमानको वरको वृक्षको आधार हो, यसैप्रकार सूक्ष्म सत् आत्मा यो सम्पूर्ण स्थूल जगत्को आधार हो । हे सौम्य, म सत्य भन्दछु, तिमी मेरा

वचनमा श्रद्धा राख । यो जुन सूक्ष्मतत्त्व आत्मा हो, त्यो सत् हो र यही आत्मा हो । हे श्वेतकेतु, त्यो सत् तिमी नै हौ ।' 'तत्त्वमसि ।'

श्वेतकेतुले भने–'भगवन्! मलाई फेरि अर्कै दृष्टान्तद्वारा सम्झाउनुहोस् ।' पिता आरुणिले एउटा नुनको डल्लो श्वेतकेतुको हातमा दिएर भने–'वत्स ! यस डल्लोलाई अहिले नै पानीले भरिएको लोटामा हालिदेऊ र फेरि भोलि बिहान सबेरै लोटा लिएर मकहाँ आउनू ।' श्वेतकेतुले त्यसै गरे । भोलिपल्ट बिहानै जब श्वेतकेतु पानीको लोटा लिएर पिताको नजिकै गए, तब उनले भने–'हे सौम्य, हिजो राति जुन नुनको डल्लो लोटामा हालेका थियौ, त्यसलाई पानीबाट निकालेर मलाई देऊ, म हेर्दछु ।' श्वेतकेतुले हेरे, तर त्यहाँ नुनको डल्लो देखेनन्, किनभने त्यो डल्लो त पानीमा पग्लेर पानीरूप नै भएको थियो । तब आरुणिले भने–'ठीक छ, यसबाट यतातिरको अलिकति पानी चाखेर बताऊ त, कस्तो छ ?' श्वेतकेतुले आचमन गरेर भने–'पिताजी, पानी त नुनिलो छ ।' आरुणिले भने–'ठीक छ, अब बीचबाट झिकेर चाख र बताऊ ।' श्वेतकेतुले चाखेर भने–'पिताजी, यो पनि नुनिलो छ ।' आरुणिले भने–'ठीक छ, अब अर्कोतिरबाट अलिकति पानी पिएर भन त, स्वाद कस्तो छ ?' श्वेतकेतुले पानी पिएर भने–'पिताजी, यतातिरको पनि स्वाद त नुनिलै छ ।' अन्तमा पिताले भने–'अब सबैतिरबाट पिएर फेरि जलालाई मिल्काइदिएर मकहाँ आऊ ।' श्वेतकेतुले त्यसै गरे र आएर पितालाई भने–'पिताजी ! मैले जुन नुन पानीमा हालेको थिएँ, यद्यपि म आफ्नो आँखाले त्यसलाई देख्न त सक्दिनँ, तर जिभ्रोद्वारा मलाई थाहा भयो कि नुनको स्थिति त्यस पानीमा सदा र सर्वत्र छ ।' पिताले भने–'हे सौम्य ! जस्तो तिमी त्यहाँ त्यो प्रसिद्ध 'सत्' नुनलाई देख्न सक्दैनौ, आँखाले तापनि नुन (नुनिलोपन) त त्यहाँ विद्यमान छ । यसैप्रकार, यो सूक्ष्मतत्त्व आत्मा छ, त्यो सत् हो र यही आत्मा हो र हे श्वेतकेतु ! त्यो आत्मा तिमी नै हौ ।' 'तत्त्वमसि ।'

श्वेतकेतुले भने–'पिताजी ! मलाई फेरि उपदेश दिनुहोस् ।' तब मुनि उद्दालकले भने–'सुन, जस्तो चोरले आँखामा पट्टि बाँधिदिएर कुनै मनुष्यलाई धेरै टाढा गान्धार देशबाट ल्याएर कुनै जङ्गलमा निर्जन प्रदेशमा छोडिदिन्छ र त्यो मान्छे पूर्व, पश्चिम, उत्तर, दक्षिण चारै दिशातिर फर्केर सहायताको लागि पुकार गर्दछ र भन्दछ–'मलाई आँखामा पट्टि बाँधेर चोरहरूले यहाँ ल्याएर छोडिदिए ।' र जसको करुण पुकारलाई सुनेर कोही दयालु पुरुष दयावश उसको आँखाको पट्टि खोलिदिन्छन् र उसलाई भनिदिन्छन्–'गान्धार देश यो दिशामा पर्दछ, तिमी या बाटो जाऊ, त्यहाँ पुग्नेछौ ।' र त्यो बुद्धिमान् अधिकारी पुरुष ती दयालु पुरुषको वचनमा श्रद्धा राखेर उनले बताएको बाटोबाट हिँड्दै गएर एक गाउँबाट अर्को गाउँमा सोध्दै–सोध्दै आखिर आफ्नो गान्धार देशमा पुग्दछन् । यसैगरी, अज्ञानको पट्टि बाँधिएको काम, क्रोध, लोभादि चोरहरूद्वारा संसाररूप भयङ्कर वनमा छोडिएको जीव ब्रह्मनिष्ठ सद्गुरुको दयापरवश भएर बताइएको बाटोबाट हिँडेर अविद्याको फन्दाबाट छुटेर आफ्नो मूल स्वरूप 'सत्' आत्मालाई प्राप्त गर्दछ । यो जुन सूक्ष्मतत्त्व छ, त्यो आत्मा हो । त्यो सत् हो, त्यही आत्मा हो । 'हे श्वेतकेतु, त्यो सत् आत्मा तिमी नै हौ ।' 'तत्त्वमसि ।'

श्वेतकेतुले भने –'भगवन् ! कृपापूर्वक मलाई फेरि उपदेश दिनुहोस् ।' तब मुनि उद्दालकले भने–'सुन, जस्तो कुनै एक रोगी मनुष्य मर्नेवाला भइसकेको छ, तब उसका सम्बन्धी मान्छे, उसलाई चारैतिर घेरेर के सोध्छन् भने मलाई चिन्दछौ वा चिन्दैनौ ? जब सम्म त्यो रोगी जीवको वाणीको मनमा, मनको प्राणमा, प्राणको तेजमा र तेजको ब्रह्ममा लय हुन्छ, तब उसले कसैलाई चिन्न सक्दैन । यो जुन सूक्ष्मभाव छ, त्यो आत्मा हो, त्यो सत् हो, त्यही नै आत्मा हो । हे श्वेतकेतु, त्यो आत्मा तिमी नै हौ ।' 'तत्त्वमसि ।'

श्वेतकेतुले भने –'भगवन् ! कृपापूर्वक फेरि मलाई सम्झाउनुहोस् ।' तब मुनिले भने–'ठीक छ, सुन ! एक जना चोरीको सन्देहमा समातिन्छ

र उसँग तैंले चोरेको हो कि होइन भनी सोधिन्छ, त्यसले अस्वीकार गर्दछ । तब राज्यका अधिकारी तात्तातो बन्चरो ल्याएर त्यसका हातमा समात्न आज्ञा गर्दछन् । बन्चरो ल्याइन्छ र यदि उसले चोरेको हो भनेर र झुटो बोलेर छुट्न चाहन्छ भने आत्मालाई असत्यसँग जोड्नाका कारण बन्चरोमा छुँदासाथ त्यसैको साथ पोलिहाल्छ र उसलाई अपराधको लागि दण्ड दिइन्छ । तर, यदि त्यो चोर होइन भने र सत्य नै भन्दछ भने आत्माको सत्यसँग संयुक्त राख्नाको कारण त्यसको साथ त्यो बन्चरोले पोल्दैन र बन्धनबाट छुटकारा पाउँछ ।'*

यसप्रकार, सत्यताको कारण आगोमा पोलेर तातेको बल्दो बन्चरोले सत्यवादीले छुटकारा पाउँछ, बँच्दछ । यसबाट के सिद्ध हुन्छ भने जीव सत् हो, त्यो सत् हो, त्यही आत्मा हो । हे श्वेतकेतु ! त्यो आत्मा तिमी नै हौ ।' 'तत्त्वमसि ।'

(छान्दोग्य–उपनिषद्को आधारमा)



* यस वर्णनबाट के थाहा हुन्छ भने प्राचीनकालमा सत्यमा कति विश्वास थियो । सत्यकै प्रतापले त्यो सत्यमय वातावरणमा पोल्दापोल्दैको बन्चरोले पनि सत्यवक्ताको हात पोल्न सक्दैनथ्यो र असत्यको आश्रयमा बस्ने आश्रयी त्यही बन्चराले पोलेर दण्डित हुन्थ्यो ।

# (९) एक सय एक वर्षको ब्रह्मचर्य

**य आत्मापहतपाप्मा विजरो विमृत्युर्विशोको विजिघत्सोऽपिपासः सत्यकामः सत्यसङ्कल्पः सोऽन्वेष्टव्यः स विजिज्ञासितव्यः स सर्वांश्च लोकानाप्नोति सर्वांश्च कामान्यस्तमात्मानमनुविद्य विजानानीति ह प्रजापतिरुवाच ।** (छान्दोग्य. ८ । ७ । १)

एक समय प्रजापतिले 'आत्मा पापदेखि रहित, बुढ्याइँदेखि रहित, मृत्युदेखि रहित, शोकदेखि रहित, भोकदेखि रहित, प्यासदेखि रहित सत्यकाम र सत्यसङ्कल्प हो भने । त्यस्तो आत्माको खोजी गर्नुपर्दछ । त्यही नै जान्न योग्य हो । जो त्यो आत्मालाई जानेर त्यसको अनुभव गर्छ, त्यसले सम्पूर्ण लोकहरूलाई र सम्पूर्ण भोगहरूलाई प्राप्त गर्छ ।'

प्रजापतिको यस्तो कुरा सुनेर देवता र असुर दुवैले आत्मालाई जान्ने इच्छा गरे । देवताहरूमा इन्द्र र असुरहरूमा विरोचन प्रतिनिधि छानिए र ती दुवैले प्रजापतिकहाँ जाने निधो गरे । पारस्परिक द्वेषको कारण आपसमा एकले अर्कालाई केही पनि नभनीकन दुवै जना हातमा समिधा लिएर विनयपूर्वक प्रजापतिकहाँ गए । *

दुवैले उहाँ गएर परस्परको ईर्ष्यालाई बिर्सेर लगातार बत्तीस वर्षसम्म ब्रह्मचर्यको पालन गरे । यसभन्दा पछि प्रजापतिले तिनीहरूसँग सोधे–

**किमिच्छन्तावावास्तम्**

'कुन इच्छाले तिमीहरू दुवै जना आएर बसेका छौ ?'

ती दुवैले भने 'भगवन्, आत्मा पापरहित, बुढ्याइँरहति, मृत्युरहित, शोकरहित, भोक र प्यासरहित, सत्यकाम र सत्यसङ्कल्प छ, त्यो जान्नयोग्य छ, त्यही नै अनुभव गर्न योग्य छ । जसले यसलाई जानेर त्यसको अनुभव गर्दछ, त्यसले सम्पूर्ण लोकहरू र सम्पूर्ण भोगहरूलाई प्राप्त गर्दछ ।

---

* यस्तो नियम छ कि 'स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्' ॥ (मुण्डक. १ । २ । १२)

शिष्यले हातमा समिधा लिएर श्रोत्रिय र ब्रह्मनिष्ठ गुरुकहाँ जानुपर्दछ ।

तपाईंका यी वचन सबैले सुने । यसैले, त्यो आत्मालाई जान्ने इच्छाले हामी यहाँ आएका हौं ।'

**तौ ह प्रजापतिरुवाच य एषोऽक्षिणि पुरुषो दृश्यत एष आत्मेति होवाचैतदमृतमभयमेतद् ब्रह्मेति ।**

प्रजापतिले भने– 'आँखामा यो जो पुरुषद्रष्टा अन्तर्मुखी दृष्टि भएकालाई देख्दछ, यही आत्मा हो, यही अमृत हो, यही अभय हो, यही ब्रह्म हो ।'

इन्द्र र विरोचनमा अशुद्ध बुद्धि हुनाको कारण यस भनाइलाई अक्षरशः जस्ताको त्यस्तै ग्रहण गरे । उनीहरूले के सम्झे भने आँखामा जुन मनुष्यको प्रतिविम्ब देखिन्छ, त्यही नै आत्मा हो । यही निश्चयलाई अझ दृढ गराउनका लागि उनीहरूले फेरि प्रजापतिसँग सोधे–'हे भगवन् ! पानीमा जुन पुरुषको प्रतिविम्ब देखिन्छ, अथवा ऐनामा शरीरको प्रतिविम्ब देखिन्छ, यी दुईमध्ये तपाईंले बताएको ब्रह्म कुनचाहिँ हो ? के यी दुवै एकै हुन् ?' प्रजापतिले भने–'हो हो, उसलाई यी दुवैमा नै देख्न सकिन्छ । उनी नै प्रत्येक वस्तुमा छन् ।'

यसभन्दा पछि प्रजापतिले उनीहरूसँग भने–' जाओ, त्यो पानीले भरिएको कुण्डमा हेर र यदि त्यहाँ आत्मालाई चिन्न सकेनौ भने फेरि मसँग सोध्नू, म तिमीहरूलाई फेरि सम्झाउँला ।' दुवै गएर कुण्डमा आफ्नो प्रतिविम्ब हेर्न लागे । प्रजापतिले सोधे–'तिमीहरूले के देख्यौ ?' उनीहरूले उत्तर दिए–

**सर्वमेवेदमावां भगव आत्मानं पश्याव आ लोमभ्य आ नखेभ्यः प्रतिरूपमिति ।**

'भगवन् ! नङदेखि लिएर टुप्पीसम्म हामी सारा आत्मालाई देखिरहेका छौं ।' नङ–टुप्पीको कुरा सुनेर ब्रह्माजीले फेरि भने–'ठीक छ, तिमीहरू जाओ र शरीरलाई स्नान गराएर(नुहाएर) राम्रा–राम्रा गहना लगाऊ र सुन्दर सुन्दर लुगा लगाऊ । फेरि गएर पानीको कुण्डमा हेर ।' नङ र कपालजस्तै यो शरीर पनि अनात्म हो । यही कुरालाई सम्झाउनका लागि नै प्रजापतिले यसो भने, तर यी दुवैले यस कुरालाई सम्झन सकेनन्

(बुझ्नेनन्) । ती दुवै राम्रोसँग नुहाइधुवाइ गरेर राम्राराम्रा लुगा र गहनाहरू लगाएर सजिसजाऊ भएर कुण्डका नजिकमा गए र त्यसमा आफ्नो छाया हेर्न लागे । प्रजापतिले सोधे–'के देख्दै छौ ?' तिनीहरूले भने–'हे भगवान्! जस्तो हामीले सुन्दर सुन्दर लुगा र गहना लगाएका छौं, यसैगरी हाम्रो यस आत्माले पनि राम्राराम्रा लुगा र गहना लगाएको रहेछ ।'

प्रजापतिले के सोचे कि अन्तःकरणको अशुद्धिको कारण आत्माको यथार्थ स्वरूप यिनीहरूको विचारमा आउन सकेन । सम्भवतः मैले भनेका कुराको राम्ररी मनन गरे भने यिनीहरूको प्रतिबन्धक पुरानो संस्कारलाई हटाएपछि यिनीहरूलाई आत्माको ज्ञान हुन सक्छ । यस्तो विचार गरेर प्रजापतिले भने–'यही आत्मा हो, यही अविनाशी हो, यही अभय हो, यही ब्रह्म हो ।'

प्रजापतिको वचन सुनेर इन्द्र र विरोचन सन्तुष्ट भएर आ–आफ्नो घरतिर लागे । उनीहरूलाई यसरी गएको देखेर प्रजापतिले मनमनै भने–

**अनुपलभ्यात्मानमननुविद्य व्रजतो यतर एतदुपनिषदो भविष्यन्ति देवा वासुरा वा ते पराभविष्यन्ति ।**

यी विचरा आत्मालाई नजानीकनै, साक्षात् अनुभव गनरीकनै जान लागे । यी देवता र असुरहरूमा जो कोही पनि यो (प्रतिविम्ब–आधार शरीरलाई नै ब्रह्म मान्ने) उपनिषद् जान्ने हुन्छन्, यिनको त पराभव (हार) नै हुनेछ ।

विरोचन त आफूलाई ज्ञानी भइयो भन्ने ठानेर शान्त हृदयले असुरहरूका नजिक गएर प्रतिविम्बको निमित्त शरीरलाई नै आत्मा सम्झेर (बुझेर) उसले यस शरीरमा आत्मबुद्धिरूप उपनिषद्को उपदेश आरम्भ गरिदियो । उसले भन्यो–प्रजापतिले शरीरलाई नै आत्मा भनी बताउनुभयो, यसकारण यो शरीररूपी आत्मा नै पूजा गर्न योग्य छ, यही नै सेवा गर्न योग्य छ, यस जगत्मा केवल यो शरीररूपी आत्माको नै पूजा र सेवा गर्नुपर्छ । यसैको सेवाले नै मनुष्यलाई दुवै लोक(दुवै लोकमा सुख) प्राप्त हुन सक्दछ ।

यो देहात्मवादका कारणले जो दान गर्दैन, सत्कार्यहरूमा श्रद्धा राख्दैन तथा यज्ञादि गर्दैन, त्यसलाई आज पनि असुर भनिन्छ । यो देहात्मवादी

उपनिषद् असुरहरूले नै चलाएको हो । यस्ता मान्छे शरीरलाई नै आत्मा मानेर यसलाई गहना, कपडा आदिले सजिसजाउ बनाउँछन् र सारा जीवन यही शरीरको सेवापूजामा नै समाप्त पार्दछन् । अन्तमा यी मान्छे मरेको शरीरलाई पनि गहना–लुगाले सजाएर के सम्भन्छन् भने हामी त स्वर्गलाई नै जित्छौँ, '**अमुं लोकं जेष्यन्तः** ।'

यतातिर दैवी सम्पदा भएका इन्द्रलाई स्वर्गमा पुग्नुभन्दा पहिले नै के विचार आयो भने 'प्रजापतिले त आत्मालाई अभय भनेका हुन्, परन्तु यो प्रतिविम्बरूप आत्मालाई त अनेक भय हुन्छन् । जब शरीरलाई सजायो त प्रतिविम्ब पनि सजाइएको देखिन्छ, शरीरमा राम्रा लुगा लगायो भने प्रतिविम्ब पनि सुन्दर लुगा लगाएको देखिन्छ, शरीर नङ–कपालरहित सफा–सुग्घर छ भने प्रतिविम्ब पनि सफा–सुग्घर देखिन्छ । यसरी नै यदि शरीर अन्धो भयो भने प्रतिविम्ब पनि अन्धो हुन्छ, शरीर कालो भयो भने छाया पनि कालै देखिन्छ । शरीर लुलो–लङ्गडो भयो भने प्रतिविम्ब पनि लुलो–लङ्गडो देखिन्छ, शरीर नाश भयो भने प्रतिविम्ब पनि नाश हुन्छ । यसकारण, यसमा त मैले केही पनि आत्मस्वरूपता देखिनँ ।'

यसरी विचार गरेर इन्द्र हातमा समिधा लिएर फेरि प्रजापतिकहाँ गए । प्रजापतिले इन्द्रलाई देखेर भने–'इन्द्र ! तिमी त विरोचनसितै शान्त हृदय लिएर फर्केर गइसकेका थियौ, अब फेरि कुन इच्छा लिएर आयौ त ?' इन्द्रले भने–'भगवन्, जस्तो शरीर हुन्छ, त्यस्तै नै प्रतिविम्ब देखिन्छ, शरीर सुन्दर वस्त्र र अलङ्कार र परिष्कृत देखिन्छ । शरीर अन्धो, वा अङ्गहीन भयो भने प्रतिविम्ब पनि त्यस्तै नै देखिन्छ । शरीर नष्ट भयो भने प्रतिविम्बरूप आत्मा पनि नष्ट हुन्छ । अतएव मलाई कुनै आनन्द हुने देखिँदैन ।'

प्रजापतिले इन्द्रको कुरा सुनेर भने–'हे इन्द्र ! कुरो यही हो । वास्तवमा प्रतिविम्ब आत्मा होइन, म तिमीलाई फेरि बुझाउँछु, अब फेरि बत्तीस वर्षसम्म ब्रह्मचर्यव्रत लिएर यहीँ बस ।' इन्द्र बत्तीस वर्षसम्म फेरि ब्रह्मचर्यसहित गुरुका समीपमा बसे, तब प्रजापतिले उनलाई भने–

**य एष स्वप्ने महीयमानश्चरत्येष आत्मेति होवाचैतदमृतमभयमेतद् ब्रह्मेति ।**

'जो यस स्वप्नमा पूजित विचरण गर्दछ, स्वप्नमा अनेक भोग भोग्छ, त्यो आत्मा हो, अमृत हो, अभय हो, त्यही ब्रह्म हो ।'

इन्द्र शान्त हृदय लिएर आफूलाई कृतार्थ सम्झेर घरतिर लागे । परन्तु, देवताहरूको नजिकै पुग्नुभन्दा पहिले नै उनले के विचार गरे भने 'स्वप्नको द्रष्टा आत्मामा पनि दोष छ । यद्यपि शरीर अन्धो हुनाले यो स्वप्नको द्रष्टा अन्धो हुँदैन, शरीरको स्राम (रोगपीडित) हुनाले यो स्राम (रोगी पीडित) हुँदैन, शरीरको दोषले यो दोषी हुँदैन, शरीर मर्नाले यो मर्दैन, तथापि यो नाश भएजस्तो, भागेको जस्तो, शोकग्रस्त भएको जस्तो र रोएको जस्तो लाग्छ । यसबाट के थाहा हुन्छ भने यसमा पनि कुनै आनन्द देखिँदैन ।'

यसप्रकार, विचार गरेर इन्द्र हातमा समिधा लिएर फेरि प्रजापतिको समीपमा गए र प्रजापतिले सोधेपछि उनले आफ्नो शङ्का उनलाई सुनाए ।

प्रजापतिले भने—'इन्द्र ! यही कुरा नै ठीक हो । स्वप्नको द्रष्टा आत्मा होइन । म तिमीलाई फेरि उपदेश गरूँला । तिमी फेरि बत्तीस वर्षसम्म ब्रह्मचर्य व्रत लिएर यहीँ बस ।'

इन्द्र तेस्रो पटक बत्तीस वर्षसम्म ब्रह्मचर्य व्रत धारण गरी त्यहीँ बसे । यसभन्दा पछि प्रजापतिले भने—'जसमा यो जीव निद्रालाई प्राप्त गरेर सम्पूर्ण इन्द्रियहरू व्यापार शान्त हुनाको कारण सम्पूर्ण रीतिले निर्मल र पूर्ण हुन्छ र स्वप्नको अनुभव गर्दैन, यो आत्मा हो, अमृत हो, अभय हो, यही ब्रह्म हो ।'

इन्द्र आत्माको यथार्थ स्वरूप बुझियो भन्ने ठानेर शान्त भएर स्वर्गतिर लागे, परन्तु देवताहरूको नजिक पुग्नुभन्दा पहिले नै बाटामा यसो विचार गर्दा उनलाई लाग्यो—सुषुप्ति अवस्थामा परेको जीवलाई आत्मा सम्झनुमा दोष पो छ त । उनले विचार गरे—'सुषुप्ति अवस्थामा आत्मा जाग्रत् र स्वप्नमा जस्तै 'यो त म हुँ'—यसरी आफूलाई जान्दैन । न यहाँका भूतहरूलाई

जान्दछ र न त्यसबाट भएको विनाशलाई नै जान्दछ । अर्थात् सुषुप्ति अवस्थाको सुख पनि निरन्तर भोग्न सक्दैन, अतएव यसमा पनि कुनै आनन्द देखिएन ।'

यसप्रकार विचार गरेर इन्द्र हातमा समिधा लिएर चौथो पटक फेरि प्रजापतिकहाँ गए । उनलाई देखेर प्रजापतिले भने–'तिमी चित्त बुझाएर गएका थियौ, फेरि फर्केर कसरी आयौ ?' इन्द्रले भने–'भगवन् ! सुषुप्तिमा देखिएको यो आत्मा जाग्रत् र स्वप्नमा जस्तै जसरी आफूलाई जान्दछ, त्यसरी नै त्यहाँ पनि 'यो मै हुँ' भनेर जान्दैन, यी भूतहरूलाई पनि जान्दैन र यस अवस्थाबाट पनि यो त नासिन्छ, अतएव म यसमा पनि कुनै आनन्द देख्दिनँ ।'

प्रजापतिले भने–'इन्द्र ! ठीक हो । सुषुप्तिमा परेको जीव वास्तवमा आत्मा होइन । म तिमीलाई फेरि यही आत्माको उपदेश दिउँला, अर्को पदार्थको होइन । तिमी यहाँ पाँच वर्षसम्म ब्रह्मचर्यव्रतपूर्वक बस ।'

तीन पटक बत्तीस–बत्तीस वर्षको ब्रह्मचर्यव्रत पालन गर्दा पनि प्रतिबन्धकरूप अलिकति पनि हृदयको मलको नाश गरेर प्रकृत अधिकारी नबनेको हुनाले त्यही बनाउने हेतुले फेरि पाँच वर्ष ब्रह्मचर्यका लागि प्रजापतिले आज्ञा दिए । पूरा एक सय एक वर्षसम्म ब्रह्मचर्यव्रतको पालन गरिसकेपछि प्रजापतिले भने–'इन्द्र ! यो शरीर मर्त्य हो, सर्वदा मृत्युले ग्रस्त छ, तापनि यो अमृतरूप तथा अशरीरी आत्माको अधिष्ठान (बस्ने र भोगादि भोग्ने ठाउँ) हो । यो अशरीरी आत्मा अब अविवेकले सशरीर अर्थात् शरीरमा आत्मभाव राख्ने हुन्छ, अनि सुख–दुःखले ग्रस्त हुन्छ । जहाँसम्म देहात्मबुद्धि रहन्छ, त्यहाँसम्म सुख–दुःखबाट छुटकारा पाउन सकिँदैन । अनुभवबाट नै जसको देहात्मभाव नष्ट भएको छ, त्यस अशरीरीलाई निःसन्देह सुख–दुःखले कहिले पनि छुन सक्दैन ।' यसभन्दा पछि वायु, अभ्र र विद्युतादिको दृष्टान्त दिँदै अन्तमा प्रजापतिले भने–'यस शरीरमा जो म देख्दछु, यसरी जान्ने त म आत्मा हुँ र आँखा त उसको रूपको ज्ञानको साधन हो, जो यस गन्धलाई म सुँघ्दछु, यसरी जसले

जान्दछ, त्यो आत्मा हो र गन्धको ज्ञानका लागि नाक छ, जो म यो वाणीको उच्चारण गर्दछु, त्यो जान्ने आत्मा हो, र त्यस्तो उच्चारणका लागि वाणी छ, जुन म सुन्दछु, यो जान्ने त आत्मा हो र त्यसलाई सुन्नका लागि श्रोत्र(कान) छ, जो म आत्मा हुँ भनेर जान्दछ, त्यो आत्मा हो र मन उसको दैवी चक्षु हो । आफ्नो स्वरूपलाई प्राप्त गर्ने त्यो मुक्तात्मा यो अप्राकृत चक्षुरूपी मनद्वारा यी भोगहरूलाई देख्दै आनन्दमा प्राप्त हुन्छ ।' यही आत्मतत्त्व हो ।

इन्द्र आनन्दमग्न भएर देवलोकमा फर्केर उनले देवताहरूलाई यही आत्माको उपदेश दिए । देवताहरूले यही आत्माको उपासना गरे । यसैबाट तिनीहरूलाई सम्पूर्ण लोक र सम्पूर्ण भोग प्राप्त भयो । जो यस आत्मालाई राम्ररी जानेर यसको साक्षात्कार गर्दछ, उसले सर्वलोक र सम्पूर्ण आनन्द प्राप्त गर्दछ ।*

(छान्दोग्य–उपनिषद्को आधारमा)



* यसप्रकार, तीव्र जिज्ञासा र अटल श्रद्धा भएपछि नै ब्रह्मको यथार्थ स्वरूपको उपलब्धि हुन्छ । स्वर्गको विशाल भोगहरूलाई छोडेर लगातार एक सय वर्षसम्म ब्रह्मचर्य पालन गरेपछि देवराज इन्द्रलाई प्रजापति यथार्थ उपदेश गर्दछन् र मात्र उनलाई ब्रह्मको साक्षात्कार हुन्छ । आजकल मान्छे विनाश्रद्धा र साधन अनायास सित्तैमा ब्रह्मलाई प्राप्त गर्न चाहन्छन् । गुरु खोज्ने र उनको नजिक जानुको आवश्यकता नै छैन भन्दछन् । यसैकारण, जस्ताको त्यस्तै रहन्छन् । पहिले त गुरु नै पाइँदैनन्, पाइहाले पनि विषयान्ध मनुष्य तिनलाई चिन्दैनन् । नचिनीकन, नसोधीकन यदि सत्पुरुषले आफ्नो स्वाभाविक दयाले केही उपदेश गरिदिए भने ता श्रद्धाको अभावले त्यो ग्रहण गरिँदैन । वास्तवमा अनधिकारीलाई नसोधीकन उपदेश दिनुको कुनै महत्त्व हुँदैन । यसैकारण, महात्माहरू नसोधीकन केही पनि भन्दैनन् । यी सारा कुराको विचार गरेर जसलाई दुःखकष्टबाट मुक्त हुने अभिलाषा छ, तिनीहरूले ब्रह्मचर्यादि स्वधनले सम्पन्न भएर श्रद्धा र भक्तिसमन्वित हृदय लिएर सद्गुरु र शास्त्रहरूको शरण लिनुपर्दछ एवम् तर्कहरूबाट सदा बचेर विश्वासपूर्वक उनको आज्ञानुसार लक्ष्यको अनुसन्धान गरेर त्यसैमा चित्तका वृत्तिहरूलाई विलीन गरिदिनुपर्दछ ।

# (१०) तीन पटक 'द'

एक समय देवता, मनुष्य र असुर सबैका पितामह प्रजापति ब्रह्माजीकहाँ शिष्यभावले विद्या सिक्न गए एवम् नियमपूर्वक ब्रह्मचर्यलाई पालन गर्दै उनको सेवा गर्न लागे । यसरी केही समय बितेपछि तिनीहरूले उपदेश ग्रहण गर्न इच्छा गरे । सबैभन्दा पहिले देवताहरूले गएर प्रजापतिसँग प्रार्थना गरे–'भगवन् ! हामीलाई उपदेश दिनुहोस् !' प्रजापतिले उत्तरमा एकै अक्षर भनिदिए 'द' । स्वर्गमा भोगहरूको भरमार छ, भोग नै देवलोकको सुख मानिएको छ, कहिल्यै बुढो नभएर देवगण सदा इन्द्रिय–भोगमा लागिरहन्छन्, आफ्नो यस अवस्थालाई विचार गरेर देवताहरूले 'द'को अर्थ 'दमन'–'इन्द्रिय–संयम' हो भन्ने सम्झे र आफूलाई कृतकृत्य मानेर प्रजापतिलाई प्रणाम गरेर तिनीहरू त्यहाँबाट स्वर्गतिर लागे । प्रजापतिले सोधे–'के तिमीहरूले मैले उपदेश दिएको उपदेशको अर्थ त बुझ्यौ ?' देवताहरूले भने–'हो, हामीले सम्झ्यौं, बुझ्यौं । तपाईंले हामी विलासीहरूलाई इन्द्रिय–दमन गर्नका लागि आज्ञा दिनुभएको हो ।' प्रजापतिले भने– 'तिमीहरूले ठीक सम्झ्यौ, मेरो 'द' भन्नुको यही अर्थ थियो । जाऊ, परन्तु मेरो उपदेशअनुसार व्यवहार गर्नू, त्यसोभयो भने तिमीहरूको कल्याण हुनेछ ।'

त्यसभन्दापछि मनुष्यहरू प्रजापतिकहाँ गएर भने–'भगवन् ! हामीलाई उपदेश दिनुहोस् ।' प्रजापतिले तिनलाई पनि त्यही 'द' अक्षरको उपदेश दिए । मनुष्यहरूले विचार गरे–'हामी कर्मयोनि हुनाको कारण सदा लोभवश कर्म गर्न र अर्थ–सङ्ग्रह गर्नमा नै लागिरहेका छौं । यसैकारण, प्रजापतिले हामी लोभीहरूलाई 'दान' गर्ने उपदेश दिएको हो । यस्तो निश्चय गरेर तिनीहरू आफ्नो सफल मनोरथ मानेर फर्कन लागे । तब प्रजापतिले तिनीहरूसँग सोध्नुभयो–'तिमीहरू मेरो उपदेशको अर्थ बुझेर जान लाग्यौ, हैन त ?' सङ्ग्रहप्रिय मनुष्यहरूले भने– 'हो हजुर, हामीले बुझ्यौं, तपाईंले हामीलाई दान गर्नका लागि आज्ञा दिनुभएको हो ।' यो

सुनेर प्रजापतिले प्रसन्न भएर भन्नुभयो–'हो, मेरो भन्नुको यही नै अर्थ थियो, तिमीहरूले ठीक बुझेछौ । अब यहीअनुसार व्यवहार गर्नू । त्यसोहुँदा तिमीहरूको कल्याण हुन्छ ।'

यसभन्दा पछि असुरहरूले प्रजापतिको समीपमा गएर प्रार्थना गरे– 'भगवन्! हामीलाई उपदेश दिनुहोस् ।' 'यिनीहरूलाई पनि प्रजापतिले 'द' अक्षरको नै उपदेश दिनुभयो । असुरहरूले के बुझे भने 'हामी स्वभावैले हिंसावृत्तिका छौँ, क्रोध र हिंसा हाम्रो नित्यकै व्यापार–व्यवहार छ । यसर्थ, प्रजापतिले हामीलाई यस्तो दुष्कर्मबाट छुटाउनका लागि कृपा गरेर जीवमात्रको दया गर्ने उपदेश दिनुभएको हो ।' यो विचार गरेर तिनीहरू जब फर्कन तयार भए, तब प्रजापतिले यिनीहरूले मेरो उपदेशको अर्थ बुझे कि बुझेनन् भन्ने विचार गरी तिनीहरूसँग सोध्नुभयो–'तिमीहरू जाँदै छौ, परन्तु मैले तिमीहरूलाई दिएको उपदेशको अर्थ बुझ्यौ कि बुझेनौ ?' तब हिंसाप्रेमी असुरहरूले भने–'देव ! तपाईंले हामी हिंस्रकहरूलाई 'द' भनेर प्राणीमात्रमा दया गर्नू भनेर आज्ञा दिनुभएको हो ।' यो सुनेर प्रजापतिले भन्नुभयो– 'वत्स ! तिमीहरूले ठीक बुझेछौ । मेरो भन्नुको तात्पर्य यही नै थियो । अब तिमीहरूले द्वेष छोडेर प्राणीका प्रति दया गर्नू, यसबाट तिमीहरूको कल्याण हुन्छ ।'

**देव दनुज मानव सभी लहैं परम कल्यान ।**
**पालै जो 'द' अर्थको दमन दया अरु दान ॥**

(बृहदारण्यक उपनिषद्को आधारमा)



# (११) परम धन

महर्षि याज्ञवल्क्यका दुई श्रीमती थिए । एउटीको नाम थियो मैत्रेयी र अर्कीको नाम थियो कात्यायनी । दुवै नै सदाचारिणी र पतिव्रता थिए, परन्तु यी दुवैमध्ये मैत्रेयी परमात्माप्रति अनुरागिणी थिइन् र कात्यायिनीको मन भने संसारका भोगमा लागेको थियो । महर्षि याज्ञवल्क्यले सन्न्यास ग्रहण गर्न लागेपछि मैत्रेयीलाई बोलाएर भने–'हे मैत्रेयी ! म अब यो गृहस्थाश्रम छोडेर सन्न्यास ग्रहण गर्न चाहन्छु । तिमीहरू दुवै नै म गएपछि आपसमा झगडा नगर्नू र सुखपूर्वक बस्न सक, त्यसकारण म के चाहन्छु भने तिमीहरू दुवै जनालाई घरको सम्पत्ति आधा–आधा भागवन्डा लगाइदिन्छु ।'

स्वामीको कुरा सुनेपछि मैत्रेयीले आफ्नो मनमा के विचार गरिन् भने 'मनुष्य आफूसँग भएको कुनै वस्तु किन छोड्न चाहन्छ भने जब पहिलेको अपेक्षा कुनै बढी उत्तम वस्तु प्राप्त हुँदै छ, त्यतिबेला । महर्षि घरबारलाई छोडेर जाँदै हुनुहुन्छ भने अतएव उहाँले यसभन्दा कुनै उत्तम वस्तु पाउनुभयो होला । त्यो प्राप्त हुने वस्तुको अगाडि घरबार सब तुच्छ हुने होला । अवश्य नै उहाँले छोडेर जानुमा कुनै ठूलो कारण हुनै पर्छ र त्यो परम वस्तु जन्ममरणको बन्धनबाट मुक्तिलाभ गराउने अमृतत्व–परमात्मालाई पाउनु नै हो ।' यस्तो विचार गरेर मैत्रेयीले भनिन्–'भगवन् ! मलाई यदि धनधान्यले परिपूर्ण समस्त पृथ्वी प्राप्त भयो भने के त्यसबाट म अमृतत्व प्राप्त गर्न सक्छु ?' याज्ञवल्क्यले भने–'सक्दिनौ, सक्दिनौ ! धनसहित पृथ्वीको प्राप्तिले तिम्रो धनीहरूको जस्तै जीवन त होला, तर त्यसबाट अमृततत्व कहिले पनि पाउन सकिन्नँ ।' मैत्रेयीले भनिन्–

**'स होवाच मैत्रेयी येनाहं नामृता स्यां किमहं तेन कुर्यां यदेव भगवान्वेद तदेव मे ब्रूहीति ।'** (बृह. २ । ४ । ३)

'जसबाट मेरो मृत्यु जाँदैन, त्यस्तो वस्तुलाई लिएर के गरूँ ? हे भगवान् ! तपाईं जो जान्नुहुन्छ (जुन परमधनको अगाडि तपाईंलाई यो

घरबार तुच्छ, प्रतीत भएको छ र ठूलो प्रसन्नतापूर्वक तपाईं सम्पूर्ण कुराको त्याग गर्दै हुनुहुन्छ) त्यही परम धन मलाई बताइदिनुहोस् ।'

याज्ञवल्क्यले भने–

**स होवाच याज्ञवल्क्यः प्रिया बतारे नः सती प्रियं भाषस एह्यास्स्व व्याख्यास्यामि ते व्याचक्षाणस्य तु मे निदिध्यासस्वेति ॥**

(बृह. २ । ४ । ४)

'मैत्रेयी ! पहिले पनि तिमी मेरी खुब प्यारी थियौ, तिम्रो यस कुराले त्यो प्रेम अझ बढेको छ । तिमी मेरो नजिकै आएर बस, म तिमीलाई अमृतत्वको उपदेश गर्दछु । मेरा कुराहरू राम्ररी सुनेर तिनको मनन गर ।' यति भनेर महर्षि याज्ञवल्क्यले प्रियतमरूपले आत्माको वर्णन आरम्भ गरे । उनले भने–

**स होवाच न वा अरे पत्युः कामाय पतिः प्रियो भवत्यात्मनस्तु कामाय पतिः प्रियो भवति ।**

'मैत्रेयी ! (पत्नीलाई) पति पतिको प्रयोजनका लागि प्रिय हुँदैन, परन्तु आफ्नै प्रयोजनका लागि पनि प्रिय हुन्छन् ।'

यो 'आत्मा' शब्दको अर्थ मान्छेहरूले भिन्नभिन्न प्रकारले गरेका छन् । कोही भन्दछन्, आत्माले यहाँ शरीरलाई लक्ष्य गरेको हो । यो त यौन–पेटपरायण पामर मान्छेको मत हो । कोही भन्दछन्, जबसम्म भित्र जीव छ, जबसम्म संसार छ, मरेपछि केही बाँकी रहँदैन, यसकारण यहा यही जीवको लक्ष्य हो । यो त पुनर्जन्म नमान्ने जडवादीहरूको मत हो । कोही 'आत्माको लागि' केके अर्थ गर्दछन् भने जुन वस्तु वा जुन सम्बन्धले आत्माको उन्नति हुन्छ, आत्मा आफ्नो स्वरूपलाई चिन्न सक्छ, त्यही प्यारो हो ।'* यसैले भनिएको छ–'**आत्मार्थे पृथिवीं त्यजेत्**', यो तीव्र मुमुक्षुको मत हो ।

---

* गोस्वामी तुलसीदासले सम्भवतः यही विचारलाई लक्ष्य गरेर भक्तको दृष्टिले भन्नुभएको छ कि –

जाके प्रिय न राम–वेदेही ।
तजिये ताहि कोटि बैरी सम, जद्यपि परम सनेही ॥

कुनै तत्त्वज्ञको मत छ–आत्माको लागि यस अर्थमा भनिएको छ कि आत्मतत्त्व हो। यो आत्माको एक मूर्ति हो। मित्रको मूर्तिलाई कोही त्यस मूर्तिका लागि चाहना गर्दैन, परन्तु चाहना गर्छ, मित्रकै लागि। संसारका समस्त वस्तुहरू किन प्यारा हुन्छन् भने तिनमा केवल एक आत्मा नै व्यापक छ, अथवा त्यो आत्माकै स्वरूप हो। महर्षि याज्ञवल्क्यले फेरि भने–

**न वा अरे जायायै कामाय जाया प्रिया भवत्यात्मनस्तु कामाय जाया प्रिया भवति। न वा अरे पुत्राणां कामाय पुत्राः प्रिया भवन्त्यात्मनस्तु कामाय पुत्राः प्रिया भवन्ति। न वा अरे प्रिया भवन्त्यात्मनस्तु कामाय पुत्राः प्रिया भवन्ति। न वा अरे वित्तस्य कामाय वित्तं प्रियं भवत्यात्मनस्तु कामाय वित्तं प्रिय भवति। न वा अरे ब्रह्मणः कामाय ब्रह्म प्रियं भवत्यात्मनस्तु कामाय ब्रह्म प्रियं भवति। न वा अरे क्षत्रस्य कामाय क्षत्रं प्रियं भवत्यात्मनस्तु कामाय क्षत्रं प्रियं भवति। न वा अरे लोकानां कामाय लोकाः प्रिया भवन्त्यात्मनस्तु कामाय लोकाः प्रिया भवन्ति। न वा अरे देवानां कामाय देवाः प्रिया भवन्त्यात्मनस्तु कामाय देवाः प्रिया भवन्ति। न वा अरे वेदानां कामाय वेदाः प्रिया भवन्त्यात्मनस्तु कामाय वेदाः प्रिया भवन्ति। न वा अरे भूतानां कामाय भूतानि प्रियाणि भवन्त्यात्मनस्तु कामाय भूतानि प्रियाणि भवन्ति। न वा अरे सर्वस्य कामाय सर्वं प्रियं भवत्यात्मनस्तु**

---

तज्यो पिता प्रह्लाद, बिभिषन बंधु, भरत महतारी।
बलि गुरु तज्यो, कंत ब्रज–बनितन्हि, भये मुद–मंगलकारी॥
नाते नेह रामके मनियत सुहृद सुसेब्य जहाँ लौं।
अंजन कहा आँखि जेहि फूटै बहुतक कहौं कहाँ लौं॥
तुलसी सो सब भाँति परम हित पूज्य प्रानते प्यारो।
जासों होय सनेह राम–पद, एतो मतो हमारो॥

(विनय–पत्रिका १७४)

**कामाय सर्वं प्रियं भवति। आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यो मैत्रेय्यात्मनि खल्वरे दृष्टे श्रुते मते विज्ञात इदं सर्वं विदितम्।** (बृह. ४।५।६)

'अरे, पत्नी पतिका लागि प्यारी भएकी होइनन्, परन्तु तिनी आफ्नै लागि,आत्माका लागि प्रिया भएकी हुन्, छोरो छोराको लागि प्रिय भएको होइन, आत्माको लागि प्यारो भएको हो; धन धनका लागि प्रिय भएको होइन, बरु आत्माकै लागि प्रिय भएको हो, ब्राह्मण ब्राह्मणको लागि प्रिय भएको होइन, आत्माको लागि प्रिय भएको हो; क्षत्रिय क्षत्रियका लागि प्रिय भएको होइन, बरु आत्माका लागि प्रिय भएको हो; लोक लोकका लागि प्रिय भएको होइन, बरु आत्माको लागि प्रिय भएको हो; देवता देवताका लागि प्रिय भएको होइन, आत्माको लागि प्रिय भएको हो; वेद वेदका लागि प्रिय भएको होइन, आत्माको लागि प्रिय भएको हो, भूत भूतका लागि प्रिय भएको होइन, आत्माको लागि प्रिय भएको हो । अरे, मैत्रेयी ! सबथोक, तिनको लागि प्रिय भएको होइन, सब आत्माको लागि प्रिय भएको हो । यो परम प्रेमको स्थान आत्मा नै वास्तवमा दर्शनयोग्य, श्रवण गर्न योग्य, मनन गर्न योग्य र निरन्तर ध्यान गर्न योग्य छ । हे मैत्रेयी ! यो आत्माको दर्शन, श्रवण–मनन र साक्षात्कारबाट नै सारा कुरा जान्न सकिन्छ । यही ज्ञान हो ।'

यसभन्दा पछि महर्षि याज्ञवल्क्यले सबको आत्मासँग अभिन्नरूप बताएर इन्द्रियहरूको आफ्ना विषयहरूमा अधिष्ठान बताए र तदनन्तर ब्रह्मको अखण्ड एकरस सत्ताको वर्णन गरी अन्तमा भने–'जबसम्म द्वैतभाव रहन्छ, तबसम्म अर्को–अर्कोलाई देख्छ, अरुअरुलाई सुँघ्छ, अरुअरुलाई सुन्छ, अरुअरुलाई कुरा गर्छ, अरुअरुका लागि कुरा गर्छ, अरुअरुका लागि विचार गर्दछ र अरुअरुलाई जान्दछ, तर जब सर्वात्मभाव प्राप्त हुन्छ, जब सारा वस्तु आत्मा नै हुन्छ, यस्तो प्रतीति हुन्छ, तब कसले कसलाई देख्ने ? कसले कसलाई सुँघ्ने? कसले कोसँग बोल्ने? कसले

कसलाई छुने ? तथा कसले कसलाई जान्ने? जसद्वारा यी समस्त वस्तुहरूलाई जान्दछ, उसलाई उसले कसरी जान्ने?'

'त्यो आत्मा अग्राह्य छ, यसले उसलाई ग्रहण गर्न सक्दैन; त्यो अशीर्य छ, यसबाट ऊ शीर्ण हुँदैन, त्यो असङ्ग छ, यसबाट ऊ कहिल्यै असफल हुँदैन । त्यो बन्धनरहित छ, यसबाट कहिल्यै दुःखी हुँदैन र उसको कहिल्यै नाश हुँदैन । यस्तो सर्वात्मरूप सबैलाई जान्ने आत्मालाई कुन तरहले जान्ने हो? श्रुतिले यसैकारण त्यसलाई 'नेतिनेति' भनेको छ, त्यो आत्मा अनिर्वचनीय छ । मैत्रेयी ! बस्, तिम्रोलागि यही उपदेश छ, यही नै मोक्ष हो ।'

'यति भनेर याज्ञवल्क्यजीले सन्न्यास लिए र वैराग्यको प्रताप तथा ज्ञानको उत्कट पिपासाको कारण स्वामीको उपदेशले मैत्रेयीले परम कल्याण प्राप्त गरिन् ।'

(बृहदारण्यक–उपनिषद्को आधारमा)



## (१२) घोडाको टाउकोबाट उपदेश

अश्विनीकुमार देवलोकका चिकित्सक हुन् । यिनले दैव अथर्णव ऋषिका शिष्य दध्याङ् अथठोव ऋषिबाट वेदाध्येयन गरेका थिए । दध्याङ् ऋषि ब्रह्मज्ञानी थिए, परन्तु वैराग्यादि साधनहरूको अभावमा अश्विनीकुमारलाई अनधिकारी सम्झेर उनले ब्रह्मविद्याको उपदेश गरेका थिएनन् । विद्याको अभिमानमा एक समय अश्विनीकुमारले इन्द्रको अपमान गरे । त्यसपछि इन्द्रले यिनलाई यज्ञभागबाट बहिष्कृत गरिदिए । त्यहाँपछि यिनलाई कुनै पनि यज्ञमा भाग पाउनु बन्द नै भयो । यिनले दिक्दार भएर गुरु दध्यङ् ऋषिसँग इन्द्रसँग लडेर उनलाई जित्ने अथवा औषधि आदिद्वारा इन्द्रलाई विनाश गर्ने आज्ञा मागे । दध्यङ् ऋषि महान् पुरुष थिए । उनले कामक्रोधादिको निन्दा गर्दै अश्विनीकुमारलाई अरुअरु उपायले सफलता प्राप्त गर्ने आज्ञा दिए र के भने भने तिमीहरू यदि हृदयको अभिमान कामक्रोधादि दोषहरूबाट रहित र वैराग्ययुक्त भएर मसँग सोध्दछौ भने म तिमीलाई अधिकारी पाएर दुर्लभ ब्रह्मविद्याको उपदेश गरूँला । त्यसपछि गुरुको आज्ञाले अश्विनीकुमारले च्यवन ऋषिको आँखाको उपचार गरिदिए र च्यवनजीले आफ्नो तपोबलले उनलाई अधिकार दिलाइदिए । यसरी लडाइँ नगरेर नै अश्विनीकुमारको मनोरथ सिद्ध भयो ।

एक समय यिनै दध्यङ् ऋषिका आश्रममा इन्द्र आए । अतिथिवत्सल ऋषिले इन्द्रसँग भने–'तपाईं मेरा अतिथि हुनुहुन्छ, जे भन्नुहुन्छ, म त्यही गर्छु ।' इन्द्रले भने–'मलाई ब्रह्मविद्याको उपदेश गर्नुहोस् ।' दध्यङ् ऋषि दुविधामा पर्नुभयो । वचन दिएर पनि गरिएन भने वाणी असत्य हुन्छ र उपदेशका अधिकारी इन्द्र छँदै छैनन् । आखिर उहाँले वचनलाई सत्य बनाउनका लागि उपदेश दिने निश्चय गर्नुभयो र राम्रोसँग ब्रह्मको उपदेश दिनुभयो । उपदेश गर्ने बेलामा ऋषिले प्रसङ्गवश भोगहरूको

निन्दा गर्नुभयो तथा भोगदृष्टिले इन्द्रलाई र एउटा कुकुरलाई उस्तै हो भनेर सिद्ध गर्नुभयो । इन्द्र ब्रह्मविद्याका अधिकारी थिएनन् नै । स्वर्गादि भोगको निन्दा सुनेर उनी रिसाए र दध्यङ् ऋषिप्रति कति प्रकारबाट सन्देह गरेर निन्दा, श्राप र हत्याको डरले उनलाई मार्ने इच्छा त छोडिदिए, तर उनले भने–'यदि तपाईं यस ब्रह्मविद्याको उपदेश अरु कसैलाई गर्नुहुन्छ भने म त्यहीबेला वज्रले तपाईंको टाउको छिनालि दिनेछु ।'

क्षमाशील ऋषिले शान्त भएर इन्द्रको कुरा सुनेर कत्ति पनि नरिसाइकन चिन्तित नभइकन भन्नुभयो–'ठीक कुरा हो, मैले कसैलाई उपदेश गरेँ भने मेरो टाउको छिनालिदिनू !' यस कुराले इन्द्रमा प्रभाव पऱ्यो र उनी शान्त भएर स्वर्गतिर फर्के ।

केही दिनपछि अश्विनीकुमार वैराग्यादि साधनहरूले सम्पन्न भएर ब्रह्मविद्याप्राप्तिका लागि गुरुका चरणमा उपस्थित भएर आफ्नो इच्छा निवेदन गरे र ब्रह्मविद्या उपदेश गर्नका लागि प्रार्थना गरे । यसमा सत्यपरायण दध्यङ्ले विचार गरे–'यिनलाई उपदेश दिइनँ भने मेरो वचन असत्य हुन्छ र उपदेश गरेँ भने इन्द्रले मेरो टाउको छिनालिदिन्छन् । वचन असत्य हुनुको अपेक्षा बरु मर्नु नै उत्तम हो । प्रतिज्ञा भङ्ग र असत्यको जुन महान् दोष हुन्छ, त्यसको अगाडि मर्नु त कत्रो कुरो हो र ? शरीरको नाश त एक दिन हुन्छ नै ।' यस्तो विचार गरेर उनले उपदेश दिने नै निश्चय गरे र अश्विनीकुमारलाई इन्द्रसँग जुन कुराकानी भएको थियो, त्यो भनेर सुनाइदिए । अश्विनीकुमारले पहिले त भने–'भगवन् ! तपाईं हामीहरूलाई अब कसरी उपदेश दिनुहुन्छ त ? के तपाईंलाई इन्द्रको वज्रबाट मर्ने डर छैन ?' तर, जब दध्यङ् ऋषिले कर्मवश शरीरधारीको मृत्युको निश्चयता, परमार्थरूपले निःसारता र सत्यको श्रेष्ठतासिद्ध गरिदिए, तब अश्विनीकुमारले भने–'भगवन् ! तपाईं कत्ति पनि नडराउनुहोस् । हामी एक युक्ति गर्दछौं, यसबाट तपाईंको मृत्यु पनि हुँदैन र हामीले ब्रह्मविद्याबाट वञ्चित हुनु पनि पर्दैन ।' हामी छुट्टा–छुट्टै भएका

अङ्गहरूलाई जोडेर जीवित गराउने विद्या जान्दछौं । पहिले हामी यस घोडाको टाउको काटिदिन्छौं; फेरि तपाईंको टाउको छिनालेर यस घोडाको टाउको तपाईंको गर्धनमा जोडिदिन्छौं र इन्द्रले काटेको घोडाको टाउको काटेर तपाईंको गर्धनमा जोडिदिन्छौं । न घोडा नै मर्दछ, न त तपाईंलाई नै केही हुन्छ ।' दध्यङ् ऋषिले यस प्रस्तावलाई स्वीकार गरी तिनलाई राम्रोसँग ब्रह्मविद्याको उपदेश गर्नुभयो । जब इन्द्रले यो कुरा थाहा पाए, इन्द्र आएर वज्रले दध्यङ् ऋषिको गर्धनमा जोडेको घोडाको टाउको छिनालिदिए । पछाडि अश्विनीकुमारहरूले सञ्जीवनी विद्याको प्रभावले घोडाको गर्धनमा जोडिएको ऋषिको टाउको निकालेर ऋषिको गर्धनमा जोडिदिए र घोडाको गर्धनमा घोडाको टाउको राखिदिए र त्यसमा जोडिदिए । दुवै जीवित भए ।

(तैत्तिरीय ब्राह्मण र बृहदारण्यक–उपनिषद्का आधारमा)



# (१३) सर्वश्रेष्ठ ब्रह्मनिष्ठ

एक समय प्रसिद्ध विदेह राजा जनकले बहुदक्षिणा नामक ठूलो यज्ञ गरे । यज्ञमा कुरु, पाञ्चाल आदि देशका धेरै नै ब्राह्मण एकत्र भए । जनक राजाले ब्राह्मणहरूलाई धेरै दक्षिणा दिए । अन्तमा 'यी ब्राह्मणहरूमा सर्वश्रेष्ठ ब्रह्मवेत्ता को हुन्' भन्ने जान्नका लागि जनकले आफ्नो गौशालाबाट एक हजार गाई निकालेर प्रत्येक गाईको दुवै सिङमा दश–दश सुनका सिक्का बाँधिदिए र ब्राह्मणहरूलाई भने–'हे पूजनीय ब्राह्मणहरू ! तपाईंहरूमा जो ब्रह्मनिष्ठ हुनुहुन्छ, उहाँले यी गाईहरू आफ्नो घरमा लैजान सक्नुहुन्छ ।' तर कुनै पनि ब्राह्मणमा ती गाई लिएर जाने साहस भएन । अन्तमा महर्षि याज्ञवल्क्यले आफ्ना शिष्य ब्रह्मचारीहरूलाई भने– 'हे प्रियदर्शन ! हे सामश्रवा !(सामवेद अध्ययन गर्ने) यी गाईहरूलाई हाम्रो घरमा लिएर जाओ ।' गुरुका यी कुरा सुनेपछि शिष्यहरूले ती गाईहरूलाई धपाएर गुरुको घरतिर लैजान लागे । यो देखेर सभामा बसेका ब्राह्मणहरूलाई बडो रिस उठ्यो, किनभने हामीहरूको अगाडि 'म ब्रह्मनिष्ठ हुँ' भनी याज्ञवल्क्यले कसरी भन्न सक्तछन् ?'

महाराज जनकका होता ऋत्विज् अश्वलले अगाडि बढेर याज्ञवल्क्यसँग सोधे–

**त्वं नु खलु नो याज्ञवल्क्य ब्रह्मिष्ठोऽसि ।**

'हे याज्ञवल्क्य ! के तिमी यी सारा ब्राह्मणहरूमा ब्रह्मनिष्ठ हौ ?'

यद्यपि यी शब्द अपमानजनक थिए, तर याज्ञवल्क्यले यस्तो उद्धतपनबाट कुनै पनि विकारलाई नदेखाएर नम्रतापूर्वक उत्तर दिए–

**'नमो वयं ब्रह्मनिष्ठाय कुर्मो गोकामा एव वयं स्मः ।'**

'भाइ ! ब्रह्मनिष्ठलाई त हामी नमस्कार गर्दछौं । हामीलाई त गाईहरूको चाहना छ । यसैकारण हामीले गाईहरूलाई धपाएका हौं ।'

ब्रह्मनिष्ठाभिमानी अश्वल याज्ञवल्क्यलाई नीच देखाउनका लागि उनीसँग एक–एक गरेर बडा–बडा जटिल प्रश्न सोध्न थाले । याज्ञवल्क्यले पनि ती सारा प्रश्नको तुरुन्त नै उत्तर दिँदै गए । यसभन्दा पछि ऋतभागका छोरा आर्तभाग, लह्यपुत्र भुज्यु, चत्रपुत्र उशस्त, कुषीतकपुत्र कहोल, वचक्नुपुत्री गार्गी र अरुणपुत्र उद्दालकले कतिपय गम्भीर प्रश्न गरे । याज्ञवल्क्यबाट तुरुन्त नै तिनको उत्तर पनि पाए । सारा ब्राह्मण थाके, तब अन्तमा गार्गीले अगाडि बढेर सारा ब्राह्मणहरूसँग भनिन्–'हे पूज्य ब्राह्मणहरू हो ! यदि तपाईंहरूको अनुमति छ भने म यी याज्ञवल्क्यसँग दुई ओटा प्रश्न फेरि गर्न चाहन्छु । यदि यी दुई प्रश्नको उत्तर यिनले दिन सके भने फेरि म के कुरा मान्दछु भने तपाईंहरूमध्ये कसैले पनि यी ब्रह्मवादीलाई जित्न सक्नुहुन्न ।' ब्राह्मणहरूले भने–'गार्गी सोध ।'

गार्गीले गम्भीर स्वरले भनिन्–'हे याज्ञवल्क्य ! जस्तो वीरपुत्र विदेहराज या काशिराज उठाइसकेको धनुमा फेरि डोरी चढाएर शत्रुलाई अत्यन्त पीडा दिने खालका दुई बाणलाई हातमा लिएर शत्रुको अगाडि खडा हुन्छन्, यसैगरी म दुई प्रश्न लिएर तिम्रो अगाडि उभिएकी छु, तिमी यदि ब्रह्मवेत्ता हौ भने यी प्रश्नको उत्तर मलाई देऊ ।'

याज्ञवल्क्यले भने–'गार्गी, सोध ।' गार्गीले सोधिन्–

**सा होवाच यदूर्ध्वं याज्ञवल्क्य दिवो यदवाक्पृथिव्या यदन्तरा द्यावापृथिवी इमे यद्भूतं च भवच्च भविष्यच्चेत्याचक्षते कस्मिंस्तदोतं च प्रोतं चेति ।** (बृह. ३ । ८ । ६)

'हे याज्ञवल्क्य ! जो ब्रह्माण्डभन्दा माथि छ, जो ब्रह्माण्डदेखि तल छ र जो यो स्वर्ग र पृथिवीको बीचमा छ, तथा जो भूत, वर्तमान र भविष्यरूप छ, यस्तो शास्त्र जान्ने मान्छे भन्दछन्, त्यो 'सूत्रात्मा (जगद्रूप सूत्र) कसमा ओतप्रोत छ ?'

याज्ञवल्क्यले उत्तर दिए–

**स होवाच यदूर्ध्वं गार्गि दिवो यदवाक्पृथिव्या यदन्तरा द्यावापृथिवी**

**इमे यद्भूतं च भवच्च भविष्यच्चेत्याचक्षत आकाशे तदोतं च प्रोतं चेति ।** (बृह. ३ । ८ । ४)

'हे गार्गी ! जो स्वर्गभन्दा माथि छ, जो पृथ्वीभन्दा तल छ र जो स्वर्ग र पृथ्वीको बीचमा छ तथा जो भूत, वर्तमान र भविष्यरूप छ, यस्ता शास्त्रवेत्तागण भन्दछन् त्यो व्याकृत(विकृति प्राप्त कार्यरूप स्थूल) जगद्रूप सूत्र अन्तर्यामीरूप आकाशमा ओतप्रोत छ ।' यो उत्तरलाई सुनेपछि गार्गीले भनिन्–'हे याज्ञवल्क्य ! तिमीले मेरो प्रश्नको यति राम्रो स्पष्ट उत्तर दियौ, यसका लागि तिमीलाई नमस्कार छ । अब दोस्रो प्रश्नका लागि तयार बन ।' याज्ञवल्क्यले भने–'गार्गी, सोध ।' गार्गीले एक पटक त्यही प्रश्नलाई फेरि दोहोर्‍याएर सोधिन्–

**कस्मिन्नु खल्वाकाश ओतश्च प्रोतश्चेति ।**

'हे याज्ञवल्क्य ! तिमी भन्दछौ व्याकृत जगद्रूप सूत्रात्मा तीनै कालमा सर्वदा अन्तर्यामीरूप आकाशमा ओतप्रोत छ, त त्यो आकाश कसमा ओतप्रोत छ ?'

याज्ञवल्क्यले भने–

**स होवाचैतद्वै तदक्षरं गार्गि ब्राह्मणा अभिवदन्त्यस्थूलमनण्वह्रस्वमदीर्घमलोहितमस्नेहमच्छायमतमोऽवायुवनाकाशमसङ्गमरसमगन्धमचक्षुष्कमश्रोत्रमवागमनोऽतेजस्कमप्राणममुखममात्रमनन्तरमबाह्यं न तदश्नाति किञ्चन न तदश्नाति कश्चन ।** (बृह. ३ । ८ । ८)

'हे गार्गी ! अन्तर्यामीरूप अव्याकृतको अधिष्ठान यही त्यो अक्षर हो, यो अविनाशी शुद्ध ब्रह्मको वर्णन ब्रह्मवेत्तागण यसप्रकार गर्दछन्–यो स्थूलभन्दा भिन्न, सूक्ष्मभन्दा भिन्न, ह्रस्वभन्दा भिन्न, दीर्घदेखि भिन्न, रातिभन्दा भिन्न, स्नेह (चिल्लोपन)भन्दा भिन्न, प्रकाशदेखि भिन्न, अन्धकारदेखि भिन्न, वायुभन्दा भिन्न, आकाशभन्दा भिन्न, सङ्गरहित, रसरहित गन्धरहित, वायुरहित, श्रोत्ररहित, वाणीरहित, मनरहित, तेजरहित, प्राणरहित, मुखरहित, परिणामरहित, छिद्ररहित र देश, काल, वस्तु आदि

परिच्छेदभन्दा रहित सर्वव्यापी अपरिच्छिन्न छ । त्यो केही पनि खाँदैन र उसलाई पनि कसैले खाँदैनन् । यसप्रकार, त्यो सब विशेषणहरूदेखि रहित एक नै अद्वितीय छ ।'

यसप्रकार, समस्त विशेषणहरूको ब्रह्ममा निषेध गरेर अब त्यसको नियन्तापन बताउँदै याज्ञवल्क्य भन्दछन्–

**एतस्य वा अक्षरस्य प्रशासने गार्गि सूर्याचन्द्रमसौ विधृतौ तिष्ठतः । एतस्य वा अक्षरस्य प्रशासने गार्गि द्यावापृथिव्यौ विधृते तिष्ठत एतस्य वा अक्षरस्य प्रशासने गार्गि निमेषा मुहूर्ता अहोरात्राण्यर्धमासा मासा ऋतवः संवत्सरा इति विधृतास्तिष्ठन्त्येतस्य वा अक्षरस्य प्रशासने गार्गि प्राच्योऽन्या नद्यः स्यन्दन्ते श्वेतेभ्यः पर्वतेभ्यः प्रतीच्योऽन्या यां यां च दिशमनु । एतस्य वा अक्षरस्य प्रशासने गार्गि ददतो मनुष्याः प्रशंसन्ति यजमानं देवा दर्वीं पितरोऽन्वायत्ताः ।** (बृह. ३ । ८ । ९)

'हे गार्गी ! यस प्रसिद्ध अक्षरको आज्ञामा सूर्य र चन्द्रमा यिनीहरू नियमितरूपले वर्तन गर्दछन् । हे गार्गी ! यो प्रसिद्ध अक्षरको आज्ञाले नै स्वर्ग र पृथ्वी हातमा राखेको ढुङ्गाजस्तै मर्यादामा रहन्छन् । हे गार्गी ! यही प्रसिद्ध अक्षरको आज्ञामा रहेर नै निमेष, मुहूर्त, दिन, रात्रि, पक्ष, महिना, ऋतु र संवत्सर यो कालको अवयवको गणना गर्ने सेवकको जस्तै नियमितरूपले आउँछन्, जान्छन् । हे गार्गी ! यही प्रसिद्ध अक्षरको शासनमा बसेर नै पूर्व वहने गङ्गा आदि नदीहरू सेतो हिमालय आदि पहाडहरूबाट निस्केर समुद्रतिर बग्दछन् । त्यस्तै पश्चिमतिर बग्ने सिन्धु आदि र अरुअरु दिशातिर बग्ने अरु नदीहरू यही अक्षरको नियन्त्रणमा आजसम्म त्यसैगरी बगिरहेका छन् । हे गार्गी ! यही प्रसिद्ध अक्षरको आज्ञाले मान्छे दाताहरूको प्रशंसा गर्दछन् र इन्द्रादि देवगण यजमान र पितृगण दर्वीको पछि लागेका छन्, अर्थात् देवता यजमानद्वारा गरिएका यज्ञद्वारा र पितृगण उनीहरूका लागि गरिएको होममा घिउ हाल्ने डाडुद्वारा अर्थात् होमबाट पुष्ट हुन्छन् ।'

यसभन्दापछि याज्ञवल्क्यले फेरि भने–

**यो वा यतदक्षरं गार्ग्यविदित्वास्मिँल्लोके जुहोति यजते तपस्तप्यते बहूनि वर्षसहस्राण्यन्तवदेवास्य तद् भवति। यो वा एतदक्षरं गार्ग्यविदित्वास्माल्लोकात्प्रैति स कृपणोऽथ य एतदक्षरं गार्गि विदित्वास्माल्लोकात्प्रैति स ब्राह्मणः।** (बृह. ३। ८। १०)

'हे गार्गी ! यो अक्षरलाई नजानीकन यदि कोही मनिस यसलोकमा हजारौँ वर्षसम्म देवताहरूलाई उद्देश्य गरेर यज्ञ गर्दछ, व्रतादि तप गर्दछ, ता पनि त्यस कर्मको फल त नाशवान् नै हुन्छ। अर्थात् फल दिएर त्यो कर्म नष्ट हुन्छ। त्यो अक्षर परम कल्याणलाई प्राप्त गर्न सक्दैन।'*

हे गार्गी ! जो पुरुष यो अक्षरलाई नजानीकन (भगवत्प्राप्ति हुनुभन्दा अगाडि नै) नै यस लोकबाट मृत्युलोक पुग्छ (मर्छ), त्यो बिचरो कृपण (दीनदयाको पात्र) हो र हे गार्गी ! जो यो अक्षरलाई जानेर यस लोकमा मर्दछ, त्यो ब्राह्मण (ब्रह्मवित्, मुक्त) हुन्छ। अब याज्ञवल्क्य ब्रह्मको उपाधिरहित स्वरूप बताउँदै भन्दछन्–

**तद्वा एतदक्षरं गार्ग्यदृष्टं द्रष्ट्रश्रुतं श्रोत्रमतं मन्त्रविज्ञातं विज्ञातृ नान्यदतोऽस्ति द्रष्टृ नान्यदतोऽस्ति श्रोतृ नान्यदतोऽस्ति मन्तृ नान्यदतोऽस्ति विज्ञात्रे तस्मिन्नु खल्वक्षरे गार्ग्याकाश ओतश्च प्रोतश्चेति।** (बृह. ३। ८। ११)

'हे गार्गी ! यो प्रसिद्ध अक्षर कसैले देख्दैनन्, तर यसले सबैलाई देख्दछ। यसको आवाज कसैले पनि कानले सुन्दैनन, तर यही सबैको आवाज सुन्दछ। यो कसैको धारणामा आउँदैन, तर यही सबैको मन्ता हो। कोही यसलाई बुद्धिद्वारा जान्न सक्दैनन्, तर यही सबैको विज्ञाता

---

* अन्तवत्तु फलं तेषां तद्भवत्यल्पमेधसाम्।
देवान्देवयजो यान्ति मद्भक्ता यान्ति मामपि॥ (गीता ७। २३)

परमात्मालाई नजान्ने ती अल्पबुद्धिजनको त्यो फल नाशवान् छ र ती (भेदभावले) देवतालाई पूजा गर्नेहरूले देवतालाई प्राप्त गर्दछन्, तर मेरा भक्त (कुनै प्रकारले पनि भज्नेवाला अन्तमा) ले भगवान्लाई नै प्राप्त गर्दछन्।

(जान्नेवाला) हो । यसभन्दा भिन्न अर्को द्रष्टा कोही छैन, यसभन्दा भिन्न अर्को श्रोता छैन, यसदेखि भिन्न अर्को मन्ता छैन र यसदेखि भिन्न अर्को विज्ञाता छैन । हे गार्गी ! यो व्याकृत आकाश यही प्रसिद्ध अक्षर अविनाशी ब्रह्ममा नै ओतप्रोत छ ।'*

महर्षि याज्ञवल्क्यको यस्तो विलक्षण व्याख्यान सुनेर गार्गी सन्तुष्ट भइन् र प्रसन्न भएर ब्राह्मणहरूसँग भन्न लागिन्–'हे पूज्य ब्राह्मणहरू हो ! याज्ञवल्क्यलाई नमस्कार गर्नुहोस् । ब्रह्मसम्बन्धी विवादमा यहाँलाई कोही पनि हराउन सक्दैन । यिनको पराजय त मनको कल्पनामा पनि आउन सक्दैन ।' यति भनेर गार्गी चुप लागिन् ।

यसभन्दा पछि शकलका छोरा शाकल्य या विदग्धले याज्ञवल्क्यसँग कतिपय यताउताका प्रश्न गरे । अन्तमा याज्ञवल्क्यले उनीसँग भने–'अब म तिमीसँग एउटा कुरा सोध्छु, तिमीले यसको उत्तर दिन सकेनौ भने तिम्रो टाउको काटिने छ । शाकल्यले उत्तर दिन सकेनन् र उनको टाउको खस्यो । याज्ञवल्क्यको ज्ञान र तेजलाई देखेर सारा सभा चकित भयो । त्यसपछि याज्ञवल्क्यले फेरि ब्राह्मणहरूसँग भने–'तिमीहरूमध्ये कोही एक वा सब मिलेर मसँग केही सोध्नुछ भने सोध । तर, कसैले केही सोधेनन् । चारैतिर याज्ञवल्क्यको जयध्वनि (जयजयकार) हुन लाग्यो । विज्ञानानन्दका कारण याज्ञवल्क्य र गार्गीको अनुहार चम्किरहेको थियो ।

यसै ब्रह्मलाई यथार्थरूपले जान्ने चेष्टा गर्नु र अन्तमा जान्नु मनुष्य जन्मको सफलताको एक मात्र प्रमाण हो ।

(बृहदारण्यकोपनिषद्को आधारमा)



* मत्तः परतरं नान्यत्किञ्चिदस्ति धनंजय ।
मयि सर्वमिदं प्रोतं सूत्रे मणिगणा इव ॥ (गीता ७ । ७)

भगवान् भन्नुहुन्छ–'हे अर्जुन ! मभन्दा बाहेक अरु केही छैन । यो सम्पूर्ण जगत् धागोमा उनिएको मणिजस्तै ममा नै गाँसिएको (उनिएको) छ ।' जो भगवान्लाई यसरी जान्दछ, ऊ नै मुक्त हुन्छ ।

# (१४) सद्गुरुको शिक्षा

वेदको अध्ययन गरिसकेपछि गुरु आफ्नो शिष्यलाई तल लेखिएको वेदधर्महरूको उपदेश गर्दछन्–

**सत्यं वद। धर्मं चर। स्वाध्यायान्मा प्रमदः।**

(तैत्ति. १।११।१)

सत्य बोल। धर्मको आचरण गर। स्वाध्यायलाई कहिल्यै त्याग नगर। आचार्यलाई गुरु–दक्षिणा दिएर प्रजाको सूत्रलाई नकाट अर्थात् ब्रह्मचर्य–आश्रमको पालन गरिसकेपछि गृहस्थाश्रममा प्रवेश गर। सत्यको कहिल्यै कुनै पनि अवस्थामा त्याग नगर। धर्मलाई कहिल्यै त्याग नगर। कल्याणकारी कर्महरूको त्याग नगर। साधनको जुन विभूति प्राप्त छ, त्यसलाई कहिल्यै पनि त्याग नगर। स्वाध्याय र प्रवचनमा कहिल्यै पनि प्रमाद नगर।

**मातृदेवो भव। पितृदेवो भव। आचार्यदेवो भव। अतिथिदेवो भव। यान्यनवद्यानि कर्माणि तानि सेवितव्यानि। नो इतराणि।**

(तैत्ति. १।११।२)

देवकर्म (यज्ञ) र पितृकर्म (श्राद्ध, तर्पण आदि) को कहिल्यै पनि त्याग नगर। आमालाई देवताजस्तै गरी पूज्यभाव राख। बाबुलाई देवताजस्तै गरी पूज्यभाव राख। आचार्यलाई देवताजस्तै गरी पूज्यभाव राख। पाहुनालाई देवताजस्तै गरी पूज्यभाव राख। जुन कर्म निन्दारहित छन्, तिनलाई गर। अन्य (निन्दित कर्म) नगर। हाम्रो (गुरुको) श्रेष्ठ आचरणहरूको अनुसरण गर, अरुको होइन।

जुन ब्राह्मण आफूभन्दा श्रेष्ठ छन्, उनलाई बस्नका लागि तुरुन्त आसन देऊ। केही न केही दान गर। श्रद्धाले दान गर, अश्रद्धाले होइन। श्रीको लागि दान गर, लक्ष्मी चञ्चल छिन्, प्रभुको सेवामा धनलाई समर्पण गरेनौ भने त धन तिमीलाई छोडेर जान्छिन्, लोकलाजका लागि पनि दान गर। शास्त्रदेखि डराएर पनि दान गर, दान गर्नु उचित छ, यस्तो

विचार गरी दान गर। आफ्नो कुनै कर्म अथवा लौकिक आचारका सम्बन्धमा मनमा कुनै शङ्का उठ्यो भने आफ्नो नजिकै बस्ने ब्राह्मणहरूमा जो वेदविहित कर्महरूमा क्रियाशील छन्, समदर्शी छन्, कुशल छन्, स्वतन्त्र छन् (कसैको दबाबमा आएर व्यवस्था गर्ने होइनन्), क्रोधरहित अथवा शान्त स्वभाव भएका छन् र धर्मको लागि नै कर्तव्य पालन गर्ने छन्, तिनी जुन प्रकारको आचरण गर्दछन्, त्यस्तै प्रकारको आचरण तिमी गर। यही आदेश हो, यही उपदेश हो, यही वेदहरूको भाव हो, यही आज्ञा हो, माथि बताइएका प्रणालीद्वारा नै आचरण गर्नुपर्दछ। यसैप्रकारका आचरण गर्नुपर्दछ।

(तैत्तिरीय–उपनिषद्)

